| | | |
|---|---|---|
| ग्रन्थको नाम | : | अन्तिम उपदेश |
| लेखक | : | श्रीशरत्कुमार भट्टराई |
| सर्वाधिकार | : | @ लेखकमा सुरक्षित |
| प्रकाशक | : | श्रीराजर्षिजनकस्मृतिकोष<br>विजयचोक, प्रयागमार्ग,<br>बत्तीसपुतली–९, काठमाडौं ।<br>फोन : ४११००५८ |
| प्रकाशन मिति | : | वि.सं. २०७० अक्षयतृतीया |
| प्रकाशित सङ्ख्या | : | ३०० प्रति |
| मूल्य | : | रू. १००।– |
| कम्प्युटर सेटिङ्ग | : | श्रीखड्गप्रसाद खनाल |
| मुद्रक | : | पिग्मा प्रिन्टर्स एण्ड सप्लायर्स<br>सरस्वतीनगर, काठमाडौं |

# अन्तिम उपदेशका बारेमा

यस अन्तिम उपदेशमा परम उपदेश समेतका पाँच ओटा रचना समाविष्ट छन् । जसमा परम उपदेश, गूढ उपदेश, येन चेतयते विश्वम्, स्तुति र अन्तिम उपदेशसमेत छन् । मैले २०६३ सालमा नै भागवतको जडभरतरहूगणसंवादलाई समछन्दमा अनुवाद गरेर ज्ञान र भक्तिनामक ग्रन्थमा प्रकाशित गरेँ । भागवतमा आएका अद्वैतपरक प्रसङ्गमा यो मलाई मन पर्दछ । त्यसमा रहेका अत्यन्त महत्त्वपूर्ण अद्वैतवेदान्तपरक सिद्धान्तलाई कविताहरूको केवल समछन्दमा अनुवाद गरेर मात्रै जिज्ञासु पाठकहरूको जिज्ञासा शान्त गर्न पर्याप्त नहुने हो कि ! भन्ने मलाई यदाकदा लाग्दथ्यो । अहिले यस उमेर सम्ममा पनि मेरो ग्रन्थ लेख्ने जाँगर चलिरहेकोले यस संवादलाई पनि पुनः छोएँ र पद्यको समछन्दको अनुवादका साथै अन्वयार्थ, स्वामी श्रीधरको संस्कृतटीका र नेपालीमा सरल अर्थ पनि दिएको छु । प्रत्येक श्लोकमा आएको अद्वैतवेदान्तलाई परिपुष्ट गर्न उपनिषद्का सान्दर्भिक मन्त्रहरूलाई पनि भर्सक दिने प्रयास गरेको छु ।

पहिलो रचना परम उपदेश अत्यन्त पठनीय छ । दोस्रो गूढ उपदेश पढ्दा सामान्य जस्तो लागे पनि नारदजीबाट अभिव्यक्त उपदेश अत्यन्त मननीय छ । तेस्रो ‘येन चेतयते विश्वम्’ झन् सारगर्भित अद्वैतसिद्धान्तका अर्थले आप्लावित देखिन्छ । चौथो स्तुति पनि उति नै महत्त्वपूर्ण लागेर मैले

कलम चलाउने धृष्टता गरेको हुँ । पाचौँ ‘अन्तिम उपदेशले पनि सबै जिज्ञासुहरूलाई सांसारिक माया र ममताबाट केही माथि उठ्ने प्रेरणा दिन्छ । यो अन्तिम उपदेश हामीहरू सबैका लागि अन्तिम उपदेश बन्न सके सबैको कल्याण हुने छ । अन्तिम बेलामा सय भाइ छोराहरूलाई अन्तिम उपदेश दिँदै चक्रवर्ती राजा श्रीऋषभदेवले भनेका थिए –

*गुरुर्न स स्यात्स्वजनो न स स्यात्*
*पिता न स स्याज्जननी न सा स्यात् ।*
*दैवं न तत्स्यान्न पतिश्च स स्या–*
*न्न मोचयेद्यः समुपेतमृत्युम् ॥*
*ती ता हुँदैनन् गुरु बन्धु दारा ।*
*मातापिता वा स्वजनै सहारा ।*
*द्यौता हउन् वा पति हुन् अवश्य,*
*हुँदैन मृत्य जुबाट वश्य ॥*

केही वर्षदेखि विहान स्वाध्याय गर्दा मैले नित्य पाठ गर्ने गरेका ग्रन्थहरूमा शुक्लयजुर्वेद, श्रीमद्भगवद्गीता र श्रीमद्भागवतमहापुराणसमेत पर्दछन् । त्यसरी पाठ गर्दा सबै ग्रन्थहरू म अर्थ बुझेर पाठ गर्ने गर्दछु । बुझ्न गारो परेमा भाष्य र टीका आदि पनि तुरुन्त नै त्यसै बखत हेरेर म स्पष्ट बुझ्न खोज्दछु । यसै क्रममा मलाई अत्यन्त मन परेका मन्त्र, श्लोक र सन्दर्भहरूको टिपोट गरेर म तिनलाई आफ्ना लेख र निबन्धहरूमा सन्दर्भ अनुरूप सन्निवेश गर्ने प्रयास गर्दछु । कहिलेकहीं भने लामा सन्दर्भहरूलाई विविध प्रकारले नेपाली भाषामा अनुवाद गरेर छुट्टै ग्रन्थका रूपमा पनि पाठकसमक्ष मैले प्रस्तुत गर्नेगरेको छु । त्यसैको परिणाति नै यो अन्तिम

उपदेश पनि हो । यो क्रम मैले 'ज्ञान र भक्ति २०६३' देखि नै शुरु गरेको हुँ र यो क्रम परमात्माको कृपा रहुञ्जेल चली नै रहने छ ।

अन्त्यमा यसको प्रकाशनमा सहयोग पुऱ्याउनु हुने सबैमा सादर कृतज्ञता प्रकट गर्दछु । धन्यवाद । ॐ ब्रह्मार्पणमस्तु ।

२०७० वैशाख १३ गते

विनीत

शरत्कुमार भट्टराई

# विषयक्रम

# १. परम उपदेश

१. *अकोविदः कोविद वादवादान् वदस्यथो नातिविदां वरिष्ठः ।*
*न सूरयो हि व्यवहारमेनं तत्त्वावमर्शेन सहामनन्ति ॥*

**अल्पज्ञ हौ तै पनि विज्ञ जस्तै, गर्छौं तिमी तर्कहरू प्रशस्तै ।**
**जहाँ कुनै तात्त्विक अर्थ छैन, तत्त्वज्ञ साँच्चै रुचि नै लिँदैन ॥**

**शब्दार्थ :– अकोविदः = अज्ञानी भएर पनि, कोविद–वादवादान् = ज्ञानीले = भन्नेजस्तो, अर्थात् अल्पज्ञ पण्डितले बोलेजस्तो बोक्रे कुरा, वदसि भन्दछौ, अथो = त्यसकारण, अतिविदाम् = ज्ञानीहरूमा, वरिष्ठः = उत्तम, न = हुनसक्तैनौ । हि = निश्चय पनि, सूरयः = ब्रह्मज्ञानीहरू, एनं = तिम्रो विवेक शून्य अहङ्कारपूर्ण, व्यवहारम् = बानीव्यहोरा र बोलीलाई, तत्त्वावमर्शेन सह = अद्वैत ज्ञान वा पारमार्थिक तत्त्वको विवेकका रूपमा, न आमनन्ति = ग्रहण गर्दैनन् ।**

**श्रीधर :– अकोविदोऽविद्वानपि त्वं कोविदानां वादा उद्ग्रहणिकास्तत्तुल्यान्वादानेव वदसि । अथो अतः, अत्यन्तं विदुषां मध्ये श्रेष्ठो नभवसि । कुतः । हि यस्मात् यं स्वामिभृत्यादि–लौकिकव्यवहारं त्वं सत्यमात्थ । एनं सूरयस्तत्त्वविचारेण सह नवदन्ति किन्त्वविचारसुन्दरं वदन्ति । अतो न सत्यः ।**

**नेपालीमा अर्थ :– हे राजा रहूगण ! तपाईं अज्ञानी भएर पनि पण्डितहरूका जस्तो सतही तर्क वितर्कयुक्त बोक्रे कुरा**

गर्नुहुन्छ । यसकारण श्रेष्ठ ज्ञानीहरूमा तपाईंको गणना हुनसक्तैन । तत्त्वज्ञानीहरू यो अविचारसिद्ध स्वामीसेवक आदि व्यवहारलाई तत्त्वविचारका समयमा स्वीकार गर्दैनन् ।

२. *तथैव राजन्नुरुगार्हमेधवितानविद्योरुविजृम्भितेषु ।*
*न वेदवादेषु हि तत्त्ववादः प्रायेण शुद्धो नु चकास्ति साधुः ॥*

गार्हस्थ्य जस्तै अनि वेदवाद, असत्य हो झण्झटिलो फसाद ।
तत्त्वार्थलाई अति दूर फाली, रागादि बढ्छन् यसबाट खालि ।
यज्ञादिका दोष अनन्त ठानी, सदैव खोज्छन् बुझ तत्त्व जानी ॥

**शब्दार्थ :– राजन् = हे महाराज रहूगण !, तथा एव = त्यसरी नै, उरुगार्हमेध = गृहस्थीहरूले गर्ने, वितानविद्या = अत्यन्त विस्तृत यज्ञहरूलाई, उरु = धेरै, विजृम्भितेषु = बढाएर भन्ने, वेदवादेषु = अर्थवादरूप वेदवचनहरूमा, हि = अवश्य नै, प्रायेण = धेरैजसो, साधुः = दोषशून्य, शुद्धः = कल्मष हिंसा आदि नभएको, तत्त्ववादः = पारमार्थिक तत्त्वज्ञानका कुरा, नु = अवश्य नै, न चकास्ति = गर्दैनन् ।**

**श्रीधरः – वैदिकोऽपि कर्मव्यवहारो न सत्य इत्याह, उरवो गार्ह्या गृहसम्बन्धिनो मेधा यज्ञास्तेषां वितानो विस्तारस्तद्विषयासु विद्यासु उरु अधिकं विजृम्भितेषु विलसितेषु वेदवादेषु तत्त्ववादो न निश्चितं न चकास्ति न प्रकाशते । तथा च श्रुति – *'नेह नानास्ति किञ्चन'* *(बृ.उ. ४।४।१९)* इत्यादि । शुद्धो हिंसादिशून्यः । साधू रागादिशून्यश्च प्रायेणेतीश्वरार्पितकर्मणां परमार्थफलत्वा–भिप्रायेणोक्तम् ।**

नेपालीमा अर्थ :– लौकिक व्यवहारका समान नै वैदिक व्यवहार पनि सत्य होइन । किनभने वेदवाक्य पनि धेरैजसो गृहस्थजनोचित यज्ञविधिका विस्तारमा नै व्यस्त छ । रागद्वेषादि दोषहरूबाट मुक्त विशुद्ध तत्त्व ज्ञानको पूर्ण अभिव्यक्ति प्रायः त्यसमा भएको छैन । श्रुतिले भनेको छ – *'तमेतमात्मानं ब्राह्मणा विविदिषन्ति यज्ञेन' (बृ.उ.४।४।२२)*

३. *न तस्य तत्त्वग्रहणाय साक्षाद् वरीयसीरपि वाचः समासान् ।*
*स्वप्ने निरुक्त्या गृहमेधिसौख्यं न यस्य हेयानुमितं स्वयं स्यात् ॥*

यज्ञादिले प्राप्त सुरेन्द्रलोक, हो स्वप्न जस्तै अति तुच्छ भोग ।
भन्ने जहाँसम्म हुँदैन भान, तत्त्वार्थमा चाख हुँदैन जान ॥

शब्दार्थ :– यस्य = जसका निमित्त, गृहमेधिसौख्यम् = गृहस्थले यज्ञ आदिद्वारा प्राप्त गर्ने स्वर्ग आदि सुख, स्वयम् = आफैँ नै, स्वप्ने = सपना जस्तो, निरुक्त्या, भनाइद्वारा, हेयानुमितम् = त्याग्नु पर्ने कुराको अनुमान, न स्यात् = हुनसक्तैन, तस्य = त्यस्ता कर्मीका लागि, वरीयसीः = सर्वश्रेष्ठ, वाचः, अपि = श्रुतिवाक्य पनि, साक्षात् = यथार्थ, तत्त्वग्रहणाय = तत्त्व बुझाउनका लागि, न समासान् = सक्षम हुँदैनन् ।

श्रीधर :– ननु श्रुतवेदान्तस्यापि पुंसः कर्मसु प्रवृत्तेः कथंसत्यता तत्राह नेतिनेति । साक्षाद्यथावत् तत्त्वज्ञानाय वरीयस्योऽपि वेदान्तवाचस्तस्य न सम्यगासन्बभूवुः । स्वप्ने या निरुक्तिस्तस्या स्वप्नदृष्टान्तेन दृश्यत्वादिहेतुना । स्वयमेव हेयत्वेनानुमितं न स्यात् ।

नेपालीमा अर्थ :– जुन व्यक्तिले गृहस्थोचित यज्ञादि कर्मबाट प्राप्त हुने भएको स्वर्गादि सुख सपनाका सरह हेय भनेर जबसम्म ठान्दैन तबसम्म उसलाई तत्त्वज्ञान गराउनलाई साक्षात् उपनिषद् वाक्यहरू पनि समर्थ हुँदैनन् ।

४. *यावन्मनो रजसा पूरुषस्य सत्त्वेन वा तमसा वाऽनुरुद्धम् ।*
*चेतोभिराकूतिभिरातनोति निरङ्कुशं कुशलं चेतरं वा ॥*

सत्त्वादि सारा गुणमा रहेर, जो कर्म गर्छन् पशुझैँ भएर ।
निर्बाध ती पुण्य र पाप गर्छन्, ती इन्द्रियासक्त भएर मर्छन् ॥

शब्दार्थ :– यावत् = जहिलेसम्म, पूरुषस्य = मान्छेको, मनः = मन, सत्त्वेन = सत्त्वगुणद्वारा, रजसा = रजोगुणद्वारा, तमसा वा = तमो गुणद्वारा पनि जबसम्म, अनुरुद्धम् = तबसम्म रोकिएको हुन्छ, निरङ्कुशम् = बेलगाम भएको, चेतोभिः = ज्ञानेन्द्रियहरूद्वारा, आकूतिभिः = अरू कर्मेन्द्रियहरूद्वारा पनि, कुशलम् = पुण्य, इतरम् = पाप, वा = अथवा, च = पाप र पुण्य दुवैको, आतनोति = विस्तार गर्दछ ।

श्रीधर :– एवं प्रपञ्चस्य सत्यत्वं तदुक्तं निराकृत्य संसारस्यापि तदुक्तां सत्यतां निराकर्तुं तस्य मनोनिमित्ततामाह– यावदित्यादिना यावत्समाप्ति । मनो यावद्रजादिभिर्गुणैरनुरुद्धं वशीकृतं भवति तावत्तन्मनो निरङ्कुशं सत् पुरुषस्य कुशलं धर्ममितरमधर्मं वा आतनोति । कैः । चेतोभिर्ज्ञानेन्द्रियैः । अकूतिभिः कर्मेन्द्रियैश्च ।

नेपालीमा अर्थ :– जहिलेसम्म मानिसको मन सत्त्व, रज

र तमोगुणको वशमा रहन्छ, त्यतिबेलासम्म विना रोकतोक उसका ज्ञानेन्द्रिय र कर्मेन्द्रियहरूले शुभाशुभ कर्मतर्फ उसलाई प्रवृत्त गराइरहन्छन् ।

५. *स वासनात्मा विषयोपरक्तो गुणप्रवाहो विकृतः षोडशात्मा ।*
*बिभ्रत्पृथङ्नामभि रूपभेदमन्तर्बहिष्ट्वं च पुरैस्तनोति ॥*

त्यो वासनात्मा विषयानुरागी, गुणानुयायी निज कर्मभागी ।
बोकी कला सोह्र विभिन्न ठाउँ, घुमेर नै हिँड्दछ जीव नाउँ ॥

शब्दार्थ :– वासनात्मा = वासनाले युक्त, गुणप्रवाहः = सत्त्व, रज र तमोगुणहरूद्वारा वशीभूत, विषयोपरक्तः = विषयहरूमा आसक्त, विकृतः = कामक्रोधादिदोषले युक्त भएको, षोडशात्मा = सोह्र कलाहरूमध्येको मुख्य, सः = त्यस मनले नै, नामभिः = देवता आदि नाम अनुरूप, पृथक् = भिन्नाभिन्नै, रूपभेदम् = रूपहरूलाई, बिभ्रत् = ग्रहण गर्दै, पुरैः = उपाधिका भेदले, अन्तर्बहिष्ट्वम् = उत्तम र अधम भाव, च = पनि, तनोति = विस्तार गर्दछ ।

श्रीधर :– ततश्च धर्माधर्मवासनायुक्तं तदेवानेकदेहादिवैचित्र्यं करोतीत्याह – स इति । पुंस्त्वमात्मशब्दविशेषणत्वेन, तन्मन इत्यर्थः । वासनायुक्त आत्मोपाधित्वादात्मा । अतो विषयै-रुपरक्तोऽनिविद्धः, अतो गुणप्रवाहो गुणैरितस्तश्चाल्यमानः । अत एव विकृतः कामादिपरिणामवान् । षोडशात्मा षोडशकलासु भूतेन्द्रियरूपासु मुख्यः । पृथङ्नामभिः सह पृथग्रूप-भेदं देवतिर्यगादिरूपं बिभ्रत् । अन्तर्बहिष्ट्वमुत्कृष्टत्वं निकृष्ट-

त्वञ्च पुरैस्तैरेव देर्हेतुभूतैस्तनोति । नामभिरित्यत्र रेफलोपो दीर्घाभाव आर्षः ।

नेपालीमा अर्थ :– यो मन वासनामय, विषयासक्त, गुणहरूबाट परिचालित, विकारी, भूत तथा इन्द्रियरूप सोह्र कलाहरूमा मुख्य हो । सोही मन विभिन्न नामहरूबाट देवता र मनुष्यादिरूप धारण गरेर शरीररूप उपाधिहरूका भेदले जीवात्माको उत्कृष्टता र निकृष्टताको कारण बन्दछ ।

६. *दुःखं सुखं व्यतिरिक्तं च तीव्रं कालोपपन्नं फलमाव्यनक्ति ।*
*आलिङ्ग्य मायारचितान्तरात्मा स्वदेहिनं संसृतिचक्रकूटः ॥*

संसारमा यो मन जीवसाथ, मिलेर मायासँग भै सनाथ ।
विभिन्न योनि क्रमसाथ सर्छ, प्रारब्धको नै सब भोग गर्छ ॥

शब्दार्थ :– दुःखम् = दुःख, सुखम् = सुख, व्यतिरिक्तम् = यी दुवैदेखि भिन्न, तीव्रम् = अवश्य पनि भोग्नै पर्ने, कालोप-पन्नम् = समय पुगेपछि प्राप्त हुने, फलञ्च = आफूले गरेको कर्मको फललाई पनि, आव्यनक्ति = उत्पन्न गर्दछ । आलिङ्ग्य = सँगै लिएर, मायारचित = मायाद्वारा उत्पन्न, अन्तरात्मा = अन्तःकरणले, स्वदेहिनम् = देहाभिमानी जीवलाई, संसृति = संसारमा आउने जाने क्रमले, चक्रकूटम् = दुश्चक्रमा घुमाइरहन्छ ।

श्रीधर :– फलञ्च तदनुरूपं करोतीत्याह । दुःखं सुखं व्यतिरिक्तञ्च मोहं तीव्रं दुर्निवारं कालप्राप्त फलं सर्वतोऽभिव्यनक्ति सृजति । ननु जडः कथं सृजति तत्राह । स्वदेहिनामालिङ्ग्य ।

अलिङ्गने कारणमाह । मायया रचितोऽन्तरात्मा जीवोपाधिः । उपाधितामाह । संसृतिश्चक्रे कूटयति छलयतीति तथा । यथा ग्रामकूट इति ।

नेपालीमा अर्थ :– यस मायामय मनले यस संसार चक्रको रचना गर्दछ । यो आफ्नो शरीरमा अभिमान राख्ने जीवात्माको सहयोग लिएर जीवलाई कालक्रमबाट प्राप्त भएका दुःख सुख र यस बाहेक मोहरूप अवश्यम्भावी कर्मफलको पनि अभिव्यक्ति गराउँदछ ।

७. *तावानयं व्यवहारः सदाविः क्षेत्रज्ञसाक्ष्यो भवति स्थूलसूक्ष्मः ।*
*तस्मान्मनो लिङ्गमदो वदन्ति गुणागुणत्वस्य परावरस्य ॥*

रहन्छ जैलेतक चित्त खास, स्वप्नादिको गर्दछ यो प्रकाश ।
राम्रा नराम्रा सब काम गर्छ, मनै त हो कारण बन्ध मोक्ष ॥

शब्दार्थ :– तावान् = अन्तःकरण अर्थात् मन रहेसम्म, अयम् = यो, व्यवहार = इन्द्रियबाट हुने काम, सदा = सधैँ, आविःप्रकाशित, क्षेत्रज्ञसाक्ष्यः = जीवात्माद्वारा गरिने, भवति = हुन्छ । स्थूलसूक्ष्म = जाग्रत् र स्वप्न अवस्था, तस्मात् = त्यसैकारण, मनः = अन्तःकरण, लिङ्गम् = कारण हो भनेर, अद = यसलाई, वदन्ति = भन्दछन्, गुणागुणत्वस्य = तीनै गुणले सहित र गुणभन्दा माथि, परावरस्य = संसार र मोक्ष पदको ।

श्रीधर :– एवमयं मनोनिबन्धनः संसारो जीवे फलतीत्या–हतावानिति । आविः प्रकाशमानः । तदा क्षेत्रज्ञस्य साक्ष्यो

दृश्यो भवति । स्थूल सूक्ष्मो जाग्रत् स्वप्नस्वरूपः, मनसः संसारहेतुत्वमुपसंहरन्मोक्षस्यापि तदेव कारणमित्याह तस्मादिति । मनः, लिङ्ग कारणं गुणत्वं गुणाभिमानित्वम् अगुणत्वं तद्राहित्यं तदेव परमवरञ्च यस्य ।

नेपालीमा अर्थ :– जबसम्म यो मन रहन्छ, तबसम्म मात्रै जाग्रत् र स्वप्नावस्थाको व्यवहार प्रकाशित भएर जीवको दृश्य बन्दछ । यसै कारणले गर्दा पण्डितहरू मनलाई त्रिगुणमय अधम संसारको र गुणातीत परमोत्कृष्ट मोक्षपदको कारण भन्दछन् ।

८. *गुणानुरक्तं व्यसनाय जन्तोः क्षेमाय नैर्गुण्यमथो मनः स्यात् ।*
*यथा प्रदीपो घृतवर्तिमश्नन् शिखाः सधूमा भजति ह्यन्यदास्वम् ।*
*पदं तथा गुणकर्मानुबद्धं वृत्तिर्मनः श्रयतेऽन्यत्र तत्त्वम् ॥*

गुणानुसङ्गी मन दुःख दिन्छ, विरक्त सोही मन मुक्ति दिन्छ ।
जस्तै भिजेको घिउबाट धागो, उगेल्छ धूवाँसँग नित्य आगो ।
सकिन्छ जैले सब तैलधारा, धूवाँसँगै बन्दछ शान्त सारा ।
त्यस्तै जहाँ यो मन हुन्छ शान्त, हुन्छन् सबै दुर्गुण दोष शान्त ॥

शब्दार्थ :– गुणानुरक्तम् = विषयमा अनुरक्त भएको, व्यसनाय = दुःख दिने हुन्छ । जन्तोः = जीवका लागि, क्षेमाय = कल्याणका लागि, नैर्गुण्यम् = गुणरहित मन भने, अथो = त्यसपछि, स्यात् = हुन्छ, यथा = जसरी, प्रदीपः = बत्तीले, घृतवर्तिम् = घिउमा भिजेको बत्तीलाई, अश्नन् = बाल्दा, शिखाः = ज्वाला, सधूमाः = धूवाँ सहित, भजति = उगेल्दछ । हि = अवश्य पनि, अन्यदा = अरू समयमा, स्वयम् = आफ्नू,

पदम् = कारण तेजमा मिल्दछ । तथा = त्यसैगरी, गुणकर्मानुबद्धम् = मायिक कर्महरूबाट बाँधिएको, वृत्तिः = वृत्ति, मनः = मनले, श्रयते = ग्रहण गर्दछ । अन्यत्र = मायिक कर्महरूबाट न बाँधिदा, तत्त्वम् = आफ्नो कारण परं ब्रह्ममा गएर एकाकार हुन्छ ।

श्रीधर :– कथमेकमेव विलक्षणयोः कारणमवस्था– भेदादित्याहगुणेति । नैर्गुण्यम्, निर्गुणम्, अथो इति कार्त्स्न्येन दृष्टान्तेन स्फुटयतियथेति । अन्यदा तु घृतक्षये । स्वं पदं शुक्लभास्वररूपं महाभूतात्मत्वं वा अन्यत्रान्यदा ।

नेपालीमा अर्थ :– संसारका विषयमा अत्यन्त आसक्त भएको मन जीवात्मालाई दुःखको हेतु हुन्छ । किन्तु सोही मन विषयरहित भयो भने मुक्तिको हेतु पनि बन्न सक्तछ । उदाहरणका लागि दियामा वर्तन र बाती रहँदासम्म बत्तीका ज्वालामा धूँवा निस्किरहन्छ, तर दियोमा वर्तन सकिएपछि भने उक्त ज्योति आफ्नै कारण तत्त्व तेजमा गएर मिल्दछ । अर्को तर्फ उदार्ह्रमा गएर भने जहिलेसम्म मन विषयमा फसिरहन्छ, तहिलेसम्म विषयलाई लिइरहन्छ, जहिले गएर विषयको आसक्तिलाई छोड्नासाथ आफ्नै परमतत्त्वमा गएर विशुद्ध अन्तःकरण, मन वा जीव एकाकार हुन्छ ।

९. *एकादशासन्मनसो हि वृत्तय आकूतयःपञ्च धियोऽभिमानः ।*
*मात्राणि कर्माणि पुरञ्च तासां वदन्ति हैकादश वीर भूमिः ॥*

आकृतिधी साथ अहं गनिन्छ, हुन् वृत्ति सारा मनका भनिन्छ ।
गन्धादि मात्रा र शरीर काम, एघार हुन्छन् उपभोग्य धाम ॥

**शब्दार्थ :–** एकादश = एघारथरी, आसन् = छन्, मनसः = मनका, हि = निश्चय नै, वृत्तयः = वृत्तिहरू, आकूतयः = कर्मेन्द्रियहरू, पञ्च = पाँच ओटा, धियः = ज्ञानेन्द्रियहरू, अभिमानः = अभिमान, मात्राणि = पञ्चतन्मात्रा, कर्माणि = धेरैथरी कर्महरू, पुरञ्च = शरीर पनि गरेर, तासां = ती वृत्तिहरू, वदन्ति = भन्दछन्, ह = पक्कै पनि, एकादश = एघार सङ्ख्यामा, वीर = हे रहूगण, मूमि = विषयहरू पनि ।

**श्रीधर :–** वृत्तीदर्शयति, एकादशवृत्तय आसन् । आकूतयः = क्रियाकाराः पञ्च, धियश्च ज्ञानाकाराः पञ्च, अभिमानश्चेति । हे वीर ! भूमिर्विषयान् ।

**नेपालीमा अर्थ :–** हे राजा रहूगण ! पाँचोटा कर्मेन्द्रियहरू, पाँचोटा ज्ञानेन्द्रियहरू र अहङ्कार समेत गरेर एघारोटा मनका वृत्तिहरू हुन् । त्यसपछि पाँचोटा कर्महरू, पाँचोटा तन्मात्रा अर्थात् विषयहरू र प्राणीहरूको देह समेत गरेर एघारओटा उपर्युक्त वृत्तिहरूका आधार अर्थात् विषयहरू हुन् ।

१०. *गन्धाकृतिस्पर्शरसश्रवांसि विसर्गरत्यर्त्यभिजल्पशिल्पाः ।*
*एकादशं स्वीकरणं ममेति शय्यामहं द्वादशमेक आहुः ॥*

गन्धादि धी इन्द्रिय बोधगम्य, भोगादि कर्मेन्द्रियबाट गम्य ।
एघारमा पर्छ ममेति मात्र, बाह्रौं अहं आश्रय तुच्छ गात्र ॥

**शब्दार्थ :–** गन्धः = गन्ध, आकृतिः = रूप, स्पर्श = स्पर्श, रस = स्वाद, श्रवः = शब्द, विसर्गः = दिसा गर्नु, रतिः = स्त्रीपुरुषसंयोग, अर्तिः = हिँडाइ, अधिजल्पः = बोलाइ,

शिल्पः = लिनु र दिनु, एकादशम् = एघार, स्वीकरणम् = स्वीकार, मम = मेरो, इति = यसरी, शय्याम् = आधारभूमि, अहम् = अहङ्कार, एके = केहीले, द्वादशम् = बाह्रौँ, आहुः = भनेका छन् ।

श्रीधर :– विषयानेवाह । गन्धादयः पञ्च ज्ञानिन्द्रियद्वारा धीवृत्तीना विषयाः । आकृतिः रूपम्, श्रवः शब्दः । विसर्गादयः पञ्च कर्मेन्द्रियद्वारा कर्माकारवृत्तीनां विषयाः, रति, सम्भोगः, अर्तिः गतिः, एकादशं परम् । स्वीक्रियत इति स्वीकरणम् । ममेति भोगायतनत्वेन स्वीकार्यतया विषय इति, एके तु विवेकिनामेवपुरं ममत्वाभिमानविषयो न तु मूढानाम्, अतो मूढ, दृष्ट्या अहं अहङ्कारं द्वादशं वृत्त्यन्तरमाहुः । तस्य च पुरमेव शय्यासंज्ञ द्वादशं विषयमाहुः । तत्र हि जीवोऽहङ्कारेण सह शेते यतः पुरि शयनात्पुरुष इत्युच्यते ।

नेपालीमा अर्थ :– ज्ञानेन्द्रिय विषयहरू जस्तै गन्ध, रूप, स्पर्श, रस र शब्दहरू हुन् । त्यसै गरेर कर्मेन्द्रियका विषयहरू हुन् – मलत्याग, मैथुन, गमन, बोलीचाली र लेनदेन । शरीरलाई मेरो भन्नु अहंको विषय हो । केहीको भनाइमा अहङ्कार मनको बाह्रौँ वृत्ति हो र त्यसको आश्रय शरीर बाह्रौँ विषय हो ।

११. *द्रव्यस्वभावाशयकर्मकालैरेकादशामी मनसो विकाराः ।*
*सहस्रशः शतशः कोटिशश्च क्षेत्रज्ञतो न मिथो न स्वतःस्युः ॥*

योे वृत्ति ता हो मनको विकार, द्रव्यस्वभावाशयकर्म काल–
द्वारा भई वृद्धि असङ्ख्य टम्म, बढेर यो जान्छ अनन्तसम्म ।
यो वृत्ति एक्लै, न मिलेर बढ्छ, क्षेत्रज्ञ आधार मिलेर बढ्छ ॥

शब्दार्थ :– द्रव्याणि = विषयहरू, स्वभावः = परिणामको कारण, आशयः = संस्कार, कर्म = अदृष्ट, कालः = क्षोभक, एकादश = एघार, अमी = यी, मनसः = मनका, विकाराः = वृत्तिहरू, सहस्रशः = हजारौँ, शतशः = सयौँ, कोटिशः = करोडौँ, च = पनि, क्षेत्रज्ञतः = क्षेत्रज्ञपरमेश्वरबाट, स्युः प्रकाशित हुन्छन् । न स्वतः = आफैँ नै, न मिथः = एक अर्कासँग मिलेर, न स्युः = प्रकाशित हुन सक्तैनन् ।

श्रीधर :– तासां वृत्तीनामवान्तरभेदैरानन्त्यमाह । द्रव्याणि विषयाः, स्वभावः परिणामहेतुः, आशयः संस्कारः, कर्म अदृष्टम्, कालः क्षोभकः, तैर्निमित्तभूतैः प्रथमं शतशस्ततः सहस्रस्ततः कोटिशः स्युर्नतु मिथः स्युर्न च स्वतः, किन्तु क्षेत्रज्ञतः परमेश्वरात् । तस्य चानन्तशक्तित्वादनन्ताः स्युरित्यर्थः । यद्वा तासां मिथ्यात्वमनेनोच्यते । कोटिशो भवन्त्यतस्ताः क्षेत्रज्ञत एव स्युस्तत्सत्तयैव सत्ता लभेरन्न तु मिथो न च स्वत इति । यद्वा क्षेत्रज्ञो जीवस्तमान्नस्युः तस्याविकारित्वात् । न मिथः, इतरेतराश्रयत्वापत्तेः । अतो मिथ्याभूता एव ।

नेपालीमा अर्थ :– मनका परिणाम अर्थात् बुद्धिका यी एघार वृत्तिहरू विषय, स्वभाव, संस्कार, कर्म र समयका कारणले गर्दा सय, हजार र करोडौँ करोड सङ्ख्यामा बन्दछन् । यी सबै वृत्तिहरू जीवात्माकै कारण निर्मित हुने हुँदा परमात्मा वा चित्‌शक्तिद्वारा नै सञ्चालित हुन्छन् । आत्माको सत्ता नपाईकन आफू आफू मिलेर अथवा एक्लै अथवा स्वतः पनि सञ्चालित वा प्रकाशित हुन समर्थ हुँदैनन् ।

१२. *क्षेत्रज्ञ एता मनसो विभूतिर्जीवस्य माया रचितस्य नित्याः ।*
*आविर्हिताः क्वापि तिरोहिताश्च शुद्धो विचष्टे ह्यविशुद्धकर्तुः ॥*

**यो वृत्ति हो मायिक जीवसृष्टि, यस्को छ छोटो अति तुच्छ दृष्टि ।**
**सुषुप्तिमा लुक्त छ यो दबेर, देखिन्छ जाग्रत् निदमा गएर ।**
**सत्ता दिई साथ सधैँ रहेर, क्षेत्रज्ञ बस्ने पर नै भएर ॥**

**शब्दार्थ :–** क्षेत्रज्ञः = आत्मा, एताः = यी, मनसः = मनका, विभूतीः = वृत्तिहरू, जीवस्य = जीवका, मायारचितस्य = मायाले तयार गरेका, नित्याः = व्यवहारकालका नित्य जस्ता, आविर्हिताः = प्रकट हुन्छन् । क्वापि = कहिले कहीँ, तिरोहिताश्च = लुक्तछन् पनि । शुद्धः = शुद्ध, विचष्टे = प्रकाशित गर्दछ । हि = निश्चय नै, अविशुद्धकर्तुः = सकामकर्म गर्ने ।

**श्रीधर :–** अन्यदा तत्त्वं श्रयत इति यदुक्तं तदेव तत्त्वमाह क्षेत्रज्ञ इति । जीवस्य जीवोपाधेः, अविशुद्धकर्तुर्मनसः, नित्याः प्रवाहरूपेणाविच्छिन्ना जाग्रत्स्वप्नयोराविर्भूताः पश्यति । क्वापि सुषुप्तौ तिरोभूताः पश्यति अवस्थात्रयसाक्षी क्षेत्रज्ञ आत्मा तत्त्वमित्यर्थः ।

**नेपालीमा अर्थ :–** यो मन मायिक उपाधि हो । यो मन मायाको सृजना भएकाले बाँधिने गर्दछ । यो संसारी सकाम कर्ममा लागिरहन्छ । मनका वृत्तिहरू अविच्छिन्नरूपले सधैँ अघि बढिरहन्छन् । जाग्रत् र स्वप्न अवस्थामा देखा पर्दछन् सपनामा हराउँदछन् । क्षेत्रज्ञ आत्मा भनेको साक्षीका रूपमा सम्पूर्ण तीनै अवस्था हेरेर चम्चमाइरहन्छ ।

१३. *क्षेत्रज्ञ आत्मा पुरुषः पुराणः साक्षात्स्वयंज्योतिरज परेशः ।*
*नारायणो भगवान् वासुदेवः स्वमाययाऽऽत्मन्यवधीयमानः ॥*

क्षेत्रज्ञ आत्मा हरि हुन् पुराना, साक्षात् स्वयंज्योति परेश नाना ।
यी जीवका अन्तरमा बसेर, चलाउँछन् तत्त्वहरू कसेर ॥

शब्दार्थ :– क्षेत्रज्ञः = आत्मा, आत्मा = व्यापक परमात्मा, पुरुषः = अन्तर्यामी वा परम कारण, साक्षात् = प्रत्यक्ष, स्वयंज्योतिः = स्वयंप्रकश, अजः = अजन्मा, परेशः = सबैका नियन्त्रक, नारायणः = प्राणीहरूका आश्रयः, भगवान् = ऐश्वर्यादि ६ गुणहरूले युक्त परमेश्वर, वासुदेवः = शुद्ध अन्तःकरणद्वारा अनुभूत परमात्मा, स्वमायया = आफ्नै मायाशक्तिद्वारा, आत्मनि = अन्तःकरणभित्र, अवधीयमानः = रहनुभएका ।

श्रीधर :– क्षेत्रज्ञो द्विविधाः त्वंपदार्थो जीवः, तत्पदार्थ ईश्वरश्च, तत्राद्यो निरूपितः । इदानीं तत्प्राप्यमीश्वरं निरूपयति । क्षेत्रज्ञ आत्मा परेषां ब्रह्मादीनामपि ईशः । नारं जीवसमूहः सोऽयनं यस्य नियन्तुः । भगवान् ऐश्वर्यादिषड्गुणवान् । वासुदेवः सर्वभूतानामाश्रयः स्वाधीनया माययात्मनि जीवेऽवधीयमानोऽवस्थाप्यमानः । कर्मकर्तरिप्रयोगः । तन्नियन्तृत्वेन वर्तमान इत्यर्थः ।

नेपालीमा अर्थ :– प्रत्येक शरीरभित्र बस्ने आत्मा नै क्षेत्रज्ञ हो । यो सर्वव्यापक छ । यो व्यापक आत्मा जगत्को आदिकारण हो । यो परिपूर्ण हो । यो अपरोक्ष छ । स्वयं प्रकाश छ । अजन्मा हो । ब्रह्मा आदिको नियन्ता हो । आफ्नै मायाको

शक्तिबाट सबैका अन्तःकरण बसेर सबैको नियमनकारी र प्रेरक बन्दछ यो आत्मा। सबै प्राणीको आश्रय भएका अन्तःकरणलाई प्रकाशित गर्ने आत्मा नै वासुदेव हुन्।

१४. *यथानिलः स्थावरजङ्गमानामात्मस्वरूपेण निविष्ट ईशेत्।*
*एवं परो भगवान् वासुदेवः क्षेत्रज्ञ आत्मेदमनुप्रविष्टः ॥*

पसी सबैभित्र अखण्ड वायु, प्राणादि भै थाम्छ समस्त आयु।
त्यस्तै छ यो व्यापक वासुदेव, क्षेत्रज्ञ आत्मा अज आत्मदेव ॥

शब्दार्थ :– यथा = जसरी, अनिलः = वायुले, स्थावरजङ्गमानाम् = सारा हिँड्ने नहिँड्ने प्राणीहरूमा, आत्मस्वरूपेण = प्राणका रूपले, निविष्ट = पसेको, ईशेत् = प्रेरणा दिन्छ। एवं = त्यसरी नै, परः = परम पुरुष, भगवान् = षड्ऐश्वर्य युक्त, वासुदेवः = वासुदेव, क्षेत्रज्ञः = प्राणीको साक्षी, आत्मा = आत्मस्वरूप, इदम् = यस सम्पूर्ण जगत्मा, अनुविष्टः = भित्र पसेर।

श्रीधर :– एतत्सदृष्टान्तमाह यथेति। आत्मस्वरूपेण प्राणरूपेण ईशेन्नियमयति। इदं विश्वम्।

नेपालीमा अर्थ :– चराचर संसारमा जसरी वायुले प्राणीहरूभित्र प्राणस्वरूपले प्रवेश गरेर प्राणीहरूलाई प्रेरणा दिन्छ। उदाहरणका रूपमा त्यसरी नै परमात्मा भगवान् वासुदेव प्रत्येक प्राणीमात्रका अन्तःकरणको साक्षीका रूपमा भित्र बसेर र सर्वव्यापक परमात्माका रूपमा सारा प्रपञ्चमा व्याप्त भएर विश्व प्रपञ्च सञ्चालन गर्नुहुन्छ।

१५. *न यावदेतां तनुभृन्नरेन्द्र विधूय मायां वयुनोदयेन ।*
*विमुक्त सङ्गो जितषट्सपत्नो वेदात्मतत्त्वं भ्रमतीह तावत् ॥*

ज्ञानी भई दूर गरेर माया, ठानेर सारा भ्रम तुच्छ छाया ।
कामादि षट्शत्रु गरेर वश्य, तर्छौ तिमी तत्त्व बुझी अवश्य ॥

शब्दार्थ :– यावत् = जहिलेसम्म, एताम् = यो, तनुभृत् = मनुष्यले, नरेन्द्र = हे राजा रहूगण ! विधूय = हटाएर, मायाम् = मायालाई, वयुनोदयेन = ज्ञानको उदयबाट, विमुक्तसङ्गः = आसक्ति छोडेर, जितषट्सपत्नः = काम समेतका ६ ओटा शत्रुहरूलाई पछारेर, आत्मतत्त्वम् = आफ्नो असली स्वरूपलाई, न वेद = जान्दैन । तावत् = तबसम्म, इह = यसै संसारमा = भ्रमति = घुम्ने काम गरिरहन्छ नै ।

श्रीधर :– तदेवमात्मनः शुद्धत्वं संसारस्य च मिथ्यात्वं प्रदर्श्येदानीं तन्निवृत्तिमाह । तनुभृद्देही वयुनोदयेन ज्ञानोत्पत्त्या यावन्मायां विधूयात्मतत्त्वं न वेद तावदिह भ्रमति ।

नेपालीमा अर्थ :– हे राजन् ! जहिलेसम्म मान्छेले ज्ञान गरेर यस संसारको कारणस्वरूप मायालाई जित्तैन, आसक्तिबाट मुक्त भएर काम, क्रोध, लोभ, मोह, मद र मात्सर्य जस्ता शत्रुहरूलाई जितेर आफ्नू सही आत्मस्वरूपलाई जान्दैन, तबसम्म त्यस्तो अभागी मान्छे यस संसारमा अनन्तकालसम्म घुमिरहन्छ ।

१६. *न यावदेतन्मन आत्मलिङ्गं संसारतापावपनं जनस्य ।*
*यच्छोकमोहामयरागलोभ वैरानुबन्धं ममता विधत्ते ॥*

अनर्थकारी मन भै प्रमादी, च्यापी सधैँ बस्छ ममत्त्व आदि ।
यी शोक मोहादिहरू बिछट्ट, बढाउँदै गर्दछ बुद्धि नष्ट ।
बुझ्दैन जैलेतक यो मनुष्य, संसारमा घुम्दछ यो अवश्य ॥

शब्दार्थ :– आत्मलिङ्गम् = जीवात्माको उपाधि भएको, एतत् = यो, मनः = मन नै, जनस्य = मान्छेका लागि, संसारतापावपनम् = कष्टप्रद यस संसारको कारण हो भन्ने कुरा, यावत् = जहिलेसम्म, न = भासित नभएसम्म संसार भित्रै घुमिरहन्छ, यत् = त्यस मनले, शोकमोहामयरागलोभ वैरानुबन्धम् = शोक, मेह, रोग, राग, लोभ, शत्रुता इत्यादि खराब संस्कारहरूलाई र, ममताम् = ममतालाई पनि विधत्ते = बढाइरहन्छ ।

श्रीधर :– यावच्च विषयानुरक्तं मन एवानर्थहेतुरिति नवेद तावन्निर्वेदाभावात्परिभ्रमत्येवेत्याह नेति । आत्मनो लिङ्गमुपाधिभूतं मनः संसारतापानामावपनं क्षेत्रं यावन्नवेद तावद्भ्रमतीत्यनुषङ्गः । तापावनत्वे हेतुः – यन्मनः शोकाद्यनुबन्धं ममताञ्च विधत्ते ।

नेपालीमा अर्थ :– जुनबेलासम्म मानिसलाई यो मेरो मन आत्माको उपाधि हो र यो संसार दुःखको कारण हो भन्ने कुरा थाहा हुँदैन । त्यसवेलासम्म त्यस मानिसले मुक्ति प्राप्त गर्न सक्तैन । किन कि उसको मनले शोक, मोह आदि संस्कारलाई बढाइरहनुका साथै म र मेरो भन्ने अहङ्कारलाई बढाइरहन्छ ।

१७. *भ्रातृव्यमेनं तददभ्रवीर्यमुपेक्षयाध्येधितम प्रमत्तः ।*
*गुरोर्हरेश्चरणोपासनास्त्रो जहि व्यलीकं स्वयमात्ममोषम् ॥*

**झूटै भए ता पनि आत्मचोर, वैरी सरी यो मन हो अघोर ।**
**छोपेर आँखा सब लुट्छ लिन्छ, गरे उपेक्षा अझ दुःख दिन्छ ।**
**राजन्! यसैकारण शीघ्र जाऊ, उपासनामा मन यो लगाऊ ।**
**श्रीकृष्णसाथै गुरुभक्तिबाट, तर्नै तिमी छौ भवसिन्धुबाट ॥**

**शब्दार्थ :– तत् = त्यसै उसले, अप्रमत्तः = प्रमत्त नभईकन, गुरोः = गुरुको, हरेः = हरिको, चरणोपासनास्त्रः = पाउको उपासनारूपी हतियारद्वारा, अदभ्रवीर्यम् = अत्यन्त बलवान्, उपेक्षया = अपहेलना गरेर, अर्थात् विचार नगर्दा, अध्येधितम् = अत्यन्त बलशाली भएको, स्वयम् = स्वरूपतः, व्यलीकम् = असत्य भएर पनि, आत्ममोषम् = जीवलाई झुक्याइरहने, एनम् = यस, भ्रातृव्यम् = शत्रु बनेको मनलाई, जहि = जित ।**

**श्रीधर :– तस्मात्, भ्रातृव्य. शत्रुमध्येधितं सम्प्रवृद्धं स्वयं व्यलीकं मिथ्याभूतं तथाप्यात्मानं मुष्णातीति तथा तम् । गुरुरेव हरिस्तस्य चरणोपासनमेवास्त्रं यस्य तथाभूत सन् जहि घातय ।**

**नेपालीमा अर्थ :– हे राजा रहूगण ! तपाईंले छाडा छोडेर अत्यन्त बलिष्ट हुँदै गएको तपाईंको मन नै तपाईंको शक्तिशाली शत्रु हो। साँच्चै भन्ने हो भने असत्य भएर पनि यस मनले तपाईंलाई झुक्याइरहेको छ । यस मनले तपाईंलाई यस सांसारिक दुश्चक्रममा घुमाइरहेको छ। तसर्थ सावधानीपूर्वक गुरु र भगवान्का पाउको उपासनारूप हतियारको सहयोग लिएर यस**

शत्रुका रूपमा देखापरेको मनलाई तुरुन्तै विजय गरिहाल। यसमा नै तपाईंको कल्याण छ।

१८. *अयं जनो नाम चलन् पृथिव्यां यः पार्थिवः पार्थिव कस्य हेतोः।*
*तस्यापि चाङ्घ्र्योरधिगुल्फजङ्घाजानूरुमध्योरशिरोधरांसाः॥*

पृथ्वीपते ! यो मनले विचार, हो देह तिम्रो पृथिवीविकार।
माटो सरी हुन् जड वस्तु सारा, हिँड्छन् कुनै कारणले विचारा।
कोही छ राजा अनि भारवाह, नामादिले भेद छ यो अथाह।
यै देहमा पाउ र काँधसम्म, विभिन्न छन् अङ्ग असाध्य टम्म॥

शब्दार्थ :– पार्थिव = हेराजन् ! अयम् = यो शरीर, पार्थिवः = पृथ्वीको विकार हो। कस्य हेतो = कुनै कारणले गर्दा, पृथिव्याम् = पृथिवीमा, चलन् = हिँड्दाखेरि, जनोनाम = बाटो हिँड्ने नाम हुन जान्छ। यः = जुन बटुवा, तस्य अपि च = त्यस माटाको डल्लाको पनि, अङ्घ्रयोः, अधि = दुइटा टेक्ने गोडामाथि, गुल्फः = गोलीगाँठो, जङ्ङ्घा = पिँडुला, जानु = घुँडो, उरु = तिघ्रा, मध्यः = कम्मर, उरः = छाती, शिरोधरांसा = गर्दन, काँध आदि अङ्गहरू हुन्छन्।

श्रीधर :– अवाधितत्वमसिद्धमित्याह हे पार्थिव, यः पार्थिव विकारः स एव कस्य हेतोः कस्माच्चित्कारणात्पृथिव्यां चलन्नयं भारवाहकादिर्जनो नाम प्रसिद्धः। यस्तु न चलति स पाषाणादि– रित्येतावानेव भेदः। तस्य च जडत्वान्न भारः श्रमश्च। किञ्च भवेदेवं यदि श्रमस्याश्रयो निरूप्येत, न त्वेददस्ति। अवयव–

व्यतिरेकेण श्रमास्पदस्यावयविनोऽनिरूपणादित्याशयेनाह । तस्यापि पृथ्वी विकारस्यापि । अङ्घ्र्योरध्युपर्युपरि गुल्फादयः । उरसः सलोप आर्षः ।

हे रहूगण ! यो तपाईंको शरीर पृथ्वीको नै विकार हो । जुन समयमा कुनै कारणले यो शरीर पृथ्वीमा हिँडडुल गर्न थाल्दछ । जब यो हिँड्डुल गर्न थाल्दछ, त्यस माटाको डल्लालाई बटुवा भनिन्छ । त्यस बटुवाका दुई खुट्टा हुन्छन्, दुई खुट्टामाथि पहिले गोलीगाँठा हुन्छन्, त्यसपछि पिँडुला, अनि घुँडा, तिघ्रा, कम्मर, छाती, घाँटी, काँध आदि क्रमैले तलदेखि माथिसम्म हुन्छन् ।

१९. *अंसेऽधि दार्वी शिविका च यस्यां सौवीर राजेत्यपदेश आस्ते ।*
*यस्मिन् भवान् रूढ निजाभिमानो राजास्मि सिन्धुष्विति दुर्मदान्धः ॥*

छ काँधमा यो शिविका र यस्मा, छ सिन्धुको भूपति राज जस्मा ।
सोही तिमी हौ अभिमानमत्त, राजा हुँ भन्ने मदले प्रमत्त ॥

शब्दार्थ :– अंसे अधि = काँधमाथि, दार्वी = काठबाट बनेको, शिबिका = पाल्की, च = पनि, यस्याम् = जसमा, सौवीरराजा इति = सौवीर भन्ने राज्यको राजा भनाउँदो, अपदेशः = तथाकथित नाममात्रको कुनै वस्तु, आस्ते = बसेको छ । यस्मिन् = जसमा, रूढनिजाभिमानः = मै हुँ भन्ने अहङ्कार र अभिमान् भएका, भवान् = तपाईं, सिन्धुषु = सिन्धु सौवीर देशको, राजा = राजा, अस्मि इति = हुँ भन्ने, दुर्मदान्धः = अभिमानले मातेको अन्धो मान्छे हुनुहुन्छ ।

श्रीधर :– शिबिकायामप्यवयवी नास्ति, त्वय्यपि नास्ति तदाह । सौवीरराजेत्यपदेशो नाममात्रं यस स पार्थिवो विकार आस्ते । राजेति सन्धिरार्षः । यस्मिभवान्निरूढात्माभिमानः सिन्धुषु राजास्मि इति दुर्मदेन अन्धः ।

नेपालीमा अर्थ :– पाल्की बोक्ने भरियाका काँधमाथि काठको पाल्की छ । त्यस पाल्कीमा सौवीर देशको तथाकथित राजा भनाउँदो पृथ्वीको विकार नाममात्रको एउटा वस्तु बसेको छ । त्यस देहाभिमानी वस्तुले पृथ्वीका तुच्छ विकारमा म हुँ भन्ने देहाभिमान राखतछ । त्यतिमात्र होइन, त्यसले म सिन्धुसौवीरदेशको राजा हुँ भन्ने अहङ्कार पनि राखेर अत्यन्त अन्धो भइरहेको छ । त्यो अहङ्करले साह्रै अन्धो भएको मान्छे तपाईं नै हुनुहुन्छ । श्रुतिले भनेको छ – "वाचारम्भणं-विकारोनामधेयं मृत्तिकेत्येव सत्यम् ।" (छा.उ.६।१।४)

२०. *शोच्यानिमांस्त्वमधिकष्टदीनान् विष्ट्या निगृह्णन्निरनुग्रहोऽसि ।*
*जनस्य गोप्तास्मि विकत्थमानो न शोभसे वृद्ध सभासु धृष्टः ॥*

बेगारमा निर्धन दीनलाई, लगाउँछौ काम सधैँ कजाई ।
उल्टै तिमी रक्षक हूँ भनेर, गर्छौ बडाकासँग फूर्ति धेर ।
गर्छौ तिमी काम भएर धृष्ट, राजन्! तिमी हौ अति नै अशिष्ट ॥

शब्दार्थ :– शोच्यान् = गरीब पाल्की बोक्नेहरू, इमान् = यी, त्वम् = तपाईं, अधिकष्टदीनान् = पाल्की बोक्नाले अत्यन्त दुःख पाइरहेका छन् । विष्टचा = बेगारमा काम लगाउन, निगृह्णन् = अधीनमा लिने, त्वम् = तपाईं, निरनुग्रह = दयामाया

नभएको, असि = हुनुहुन्छ । जनस्य = प्रजाको, गोप्ता = संरक्षक, अस्मि = हुँ भनी, विकत्थमानः = भन्दै हिँड्ने, धृष्टः = अत्यन्त अहङ्कारी तपाईं, वृद्धसभासु = तत्त्ववेत्ताहरूका सभामा, न शोभसे = शोभा पाउनु हुन्न ।

श्रीधर :– शोच्यानिमान्विष्टया निवह्निन्निष्कृपोवर्तसे, अतो मिथ्यैष गोप्ताऽस्मीति श्लाघमानो महतां सभासु न शोभसे । यतो धृष्टः ।

नेपालीमा अर्थ :– बेगारका रूपमा भोकै पाल्की बोक्नुपर्दा अत्यन्त दुःख भोगिरहेका गरीब यी भरियाहरू हुन् । यिनलाई जबरजस्ती विना ज्याला पाल्की बोकाएर आरामसँग हिँड्ने तपाईंलाई कसैले पनि राम्रो र असल मान्छे भन्दैन । साँच्चै भन्ने हो भने हे रहूगण ! तपाईं अति अहङ्कारी र क्रूर हुनुहुन्छ । किनभने विना ज्याला यी दीनदुःखीलाई आफ्नो पाल्की बोकाउनु हुन्छ र फेरि यसको प्रतिकूल जनताको रक्षक हुँ भनेर ठूला ठूला कुरा गरेर धाक लगाइरहनु भएको छ । यस्तो दोग्ला र ढोँगी काम कुरा गर्ने तपाईंलाई तत्त्वज्ञानीहरूका सभामा जान अलिकति पनि शोभा दिँदैन ।

२१. *यदा क्षितावेव चराचरस्य विदाम निष्ठा प्रभवं च नित्यम् ।*
*तान्नामतोऽन्यद् व्यवहारमूलं निरूप्यतां सत् क्रिययानुमेयम् ॥*

पृथ्वीभरी छन् जति यी प्रसूत, यी हुन् सबै पार्थिव दृश्य भूत ।
छोडेर सारा गुण रूप नाम, विलीन हुन्छन् यसमै तमाम ।

यी कामका कारण मात्र भिन्न, छन् नाम सारा यिनका विभिन्न ।
विकार हुन् यी सब हुन् असत्य, राजन्! उही ब्रह्म छ एक सत्य ॥

शब्दार्थ :– यदा = जुन बेला, क्षितौ एव = पृथिवीमा नै, चराचरस्य = हिंड्ने र नहिँड्ने सबै प्राणीहरूको, विदाम = जान्दछौँ, निष्ठाम् = स्थिति, प्रभवञ्च = उत्पत्ति पनि, नित्यम् = सधैँ, तत् = त्यसबेला, नामतः = केवल नामदेखि बाहेक, अन्यत् = अरू बढी केही हुनसक्तैन । व्यवहारमूलम् = व्यवहारको कारण, निरूप्यताम् = भन्नुहोस् । सत् = साँचो, क्रियया = अर्थक्रिया–कारिता भएकाले, अनुमेयम् = अन्दाज लगाउन योग्य छ ।

श्रीधर :– न चोत्तरोत्तराव्यवभारः पूर्वपूर्वावयवानां भवेदिति वाच्यम् । तेषामप्यनिरूपणादित्यात्याशयेनाह यदेति । निष्ठां नाशं प्रभवमुत्पत्तिं विदाम विद्मस्तत्तदा क्षितेरन्यस्य विकारस्या–भावान्नाममात्रादन्यद्व्यवहारस्य मूलं कारणमर्थक्रियया सदित्यनुमेयं निरूप्यताम् ।

नेपालीमा अर्थ :– देखिने यो सारा चराचर संसार माटाबाट पैदा भएर फेरि माटामा नै मिलेको देख्तछौँ । यसबाट माटो अर्थात् पृथिवी नै चराचर जगत्को उपादानकारण भएको थाहा हुन्छ । कामको भेदले गर्दा बेग्लाबेग्लै नाम भएका मात्रै हुन् । त्यसमा नाम बाहेक अरू भिन्नै कुनै वस्तु छैन । भए हे राजन् ! भन्नुहोस् । श्रुतिले भनेको पनि छ – *'वाचारम्भणं विकारो नामधेयं मृत्तिकेत्येव सत्यम्'* (छा.उ.६।१।४)

२२. *एवं निरुक्तं क्षितिशब्दवृत्तमसन्निधानात्परमाणवो ये ।*
*अविद्यया मनसा कल्पितास्ते येषां समूहेन कृतो विशेषः ॥*

विचार गर्दा पृथिवी समस्त, हुने छ सानु अणुभित्र अस्त ।
यो हो अविद्याकृत सृष्टि खास, यैसाथ होला परमाणु नाश ।
राजन् ! यसोरी पृथिवी अशेष, भएर जाला जब नाम शेष ।
विकार रूपादि रहन्छ कैले ? होला यहाँ नाश सबै क्रमैले ।
रहन्न पृथ्वी अनि के रहन्छन् ? संसार मिथ्या बुध नित्य भन्छन् ॥

शब्दार्थ :– एवम् = यसरी, निरुक्तम् = थाहा हुन्छ, क्षितिशब्दवृत्तम् = पृथिवी शब्दबाट व्यवहार गरिने द्रव्य पनि, असन्निधानात् = सूक्ष्मरूपमा पुगेपछि अदृश्य बन्ने हुनाले, ये परमाणवः = जुन परमाणुहरू हुन्, अविद्यया = अविद्याबाट, मनसा = मनबाट, कल्पिताः = कल्पना गरिएका मात्र हुन् । ते = तिनीहरू, येषाम् = जुन परमाणुहरूको, समूहेन = समूहले, कृतः = बनाइएका हुन् । विशेषः = पृथ्वी नाम गरेको खास वस्तु छैन ।

नेपालीमा अर्थ :– अन्त्यमा गएर पृथिवी पनि मिथ्या नै हो । यो पनि गएर आफ्नू परम कारण सूक्ष्म परमाणुमा मिल्दछ । धेरै धेरै परमाणुहरूको समूहको परिणाम वा पुञ्ज नै त पृथ्वी हो । आखिरी परमाणुहरू पनि अनित्य वा मिथ्या हुन् । यी मायिक र मनका कल्पनामात्र हुन् । वस्तुतः यिनको आफ्नू कुनै सत्ता छैन ।

२३. *एवं कृशं स्थूलमणुबृहद्यद् असच्च सञ्जीवमजीवमन्यत् ।*
*द्रव्यस्वभावाशयकालकर्मनाम्नाजयावेहि कृतं द्वितीयम् ॥*

यसैगरी चेत अचेत नाना, मोटा र दुब्ला अति सूक्ष्म साना ।
आफैं भई कारणकार्यसम्म, यो सृष्टिको सिर्जन हुन्छ टम्म ।
द्रव्यस्वभावाशयकर्मकाल, रचेर नामादिक इन्द्रजाल ।
प्रपञ्चमा नित्य अगाडि सर्छे, माया उनैकी सब काम गर्छे ॥

शब्दार्थ :– एवम् = यसरी, कृशम् = दुब्लो, स्थूलम् = मोटो, अणुः = अति सानो, बृहद् = ठूलो, यत् = जुन, असत् = कार्य, च = पनि, सत् = कारण, जीवम् = चेतन, अजीवम् = जड, अन्यत् = अरू सबै, द्रव्यस्वभावाशयकालकर्मनाम्ना = पृथिवी आदि द्रव्य, तिनका स्वभाव, संस्कार, काल र कर्म आदि नाम भएका, अजया = मायाद्वारा, अवेहि = जान्नुहोस्, द्वितीयम् = भिन्नै, कृतम् = बनाइएको हो ।

श्रीधर :– एवमन्यदपि कृशत्वादिधर्मकं बुद्धया प्रतीत द्वितीयं द्वैतं द्रव्यादिनाम्नोपलक्षितयाऽजया मायया कृतमवेहि । तत्र कृशं ह्रस्वं स्थूलं तत्प्रतियोगि । अणुबृहतोः पृथगुपादानात् । असत् कारणम् सत् कार्यम्, जीवम् चेतनम्, अजीवं जडम् ।

नेपालीमा अर्थ :– यसरी नै दुब्लो, मोटो, सानो, ठूलो, कार्य, कारण, चेतन, जड समेतको भेदभाव देखापर्दछ । यो सम्पूर्ण कुरा क्षणिक र मिथ्या हो । यी सारा भेदभाव द्रव्य, स्वभाव, संस्कार, काल, कर्म आदि नाना नाम र उपाधि भएकी भगवान्की मायाले सिर्जना गरेकी हो । यी सारा ब्रह्मका विवर्त हुन् । ब्रह्म मात्रै परम सत्य हो । *‘ब्रह्म सत्यं जगन्मिथ्या’* (ईश्वरगीता)

२४. *ज्ञानं विशुद्धं परमार्थमेकमनन्तरं त्वबहिर्ब्रह्म सत्यम् ।*
*प्रत्यक् प्रशान्तं भगवच्छब्दसंज्ञं यद्वासुदेवं कवयो वदन्ति ॥*

**विशुद्ध अद्वैतअनन्तरूप, हो ज्ञान सत् चित् सुखको स्वरूप ।**
**यो ब्रह्म हो बाहिर भित्रसम्म, सत्ता दिई भास्तछ सृष्टि टम्म ।**
**प्रत्यक् भई भित्र लुकेर देख्छ, साक्षी भई पाप र पुण्य लेख्छ ।**
**अनन्त यो हो भगवान् सुदेव, भन्छन् सबै व्यापक वासुदेव ॥**

**शब्दार्थ :–** ज्ञानम् = स्वरूपभूत ज्ञान, विशुद्धम् = शुद्ध, परमार्थम् = परमार्थरूप, एकम् = एउटै मात्र, अनन्तरम् = बाहिर, अबहिः = भित्र, ब्रह्म = व्यापक, सत्यम् = सत्य, प्रत्यक् = सबैका भित्र रहेको, शान्तम् = निर्विकार, भगवच्छब्दसंज्ञम् = भगवान् नाम भएको, यत् = जुन, वासुदेवम् = वासुदेव, कवयः = कविहरू, वदन्ति = भन्दछन् ।

**श्रीधर :–** तर्हि किं सत्यं तदाह । ज्ञानं सत्यम् । व्यावहारिकसत्यत्वं व्यावर्तयति, परमार्थम्, वृत्तिज्ञानव्यवच्छेदार्थानि षड्विशेषणानि । विशुद्धम्, तत्त्वाविद्यकम्, एकम्, तत्तु नानारूपम् । अनन्तरं त्वबहिबाह्याभ्यन्तरशून्यम्, तत्तुविपरीतम् । ब्रह्म परिपूर्णम्, तत्तु परिच्छिन्नम् । प्रत्यक्, तत्तु विषयाकारम् । प्रशान्तं निर्विकारम् । तदेवं स्वरूपज्ञानं सत्यमित्युक्तम् । कीदृशं तत् । ऐश्वर्यादिषड्गुणत्वेन भगवच्छब्दः संज्ञा यस्य । यच्च ज्ञानं वासुदेवं वदन्ति । 'सत्यंज्ञानमनन्तं ब्रह्म' – श्रुतिः ।

**नेपालीमा अर्थ :–** सत्य वस्तु वस्तुतः तीनै कालमा रहने परमर्थ स्वरूप हो । अद्वितीय हो । भित्र वा बाहिर कुनै

भेदभाव नभएको पूर्ण ज्ञान नै सत्य वस्तु हो । जुन सत्य वस्तु सर्वव्यापक र निर्विकार हो । यसैलाई भागवान् भनिन्छ । अनि वासुदेव पनि यसैलाई भनिन्छ । *'सत्यंज्ञान-मनन्तं ब्रह्म' – श्रूतिः ।*

२५. *रहूगणैतत्तपसा न याति न चेज्यया निर्वपणात् गृहाद्वा ।*
*नच्छन्दसा नैव जलाग्नि सूर्यैर्विना महत्पादरजोऽभिषेकम् ॥*

धूलो बडाका पदको लिएर, नुहाउँदैनौ जबसम्म हेर ?
राजन् ! महान् वैदिक यज्ञ कर्म, स्वाध्याय पूजा तप दान धर्म ।
जस्तोसुकै जे गर पुण्य काम, यी बन्दछन् व्यर्थ सबै बिकाम ॥

शब्दार्थ :– रहूगण = हे राजन् ! एतत् = यो ज्ञान, तपसा = तपस्याले, न याति = पाइँदैन, न च यज्यया = न यज्ञ गरेर पाइन्छ । न निर्वपणात् = न अन्नादिको दान गरेर पाइन्छ । न गृहात् = न नित्य नैमित्तिक कर्म गरेर नै पाइन्छ । न छन्दसा च = न वेद पढेर नै पाइन्छ । न जलाग्निसूर्यैः = न जल, अग्नि, सूर्य आदिका उपासनाले नै पाइन्छ । महत्पादरजः = महापुरुषका पाउको धूलोलाई, विना अभिषेकम् = शिरमा न चढाएसम्म ।

श्रीधर :– एतत्प्राप्तिस्तु महत्सेवां विना न भवतीत्याह । हे रहूगण, एतज्ज्ञानं तपसा पुरुषो न याति । इज्यया वैदिककर्मणा । निर्वपणादन्नादिसंविभागेन गृहाद्वा तन्निमित्तपरोपकारेण । छन्दसा वेदाभ्यासेन । जलाग्न्यादिभिरुपासितैः ।

नेपालीमा अर्थ :– हे राजा रहूगण ! ज्ञानरूप परमात्मा

प्राप्त गर्नका लागि खालि तपस्या, यज्ञयागादि, अन्नदान, वेदको अध्ययन, गृहस्थधर्म गरेर र सूर्यादि देवताहरूको उपासना पूजा आदि पर्याप्त हुँदैनन् । यसका लागि महात्मा ज्ञानीहरूको सेवा गर्नुपर्दछ ।

२६. *यत्रोत्तमश्लोकगुणानुवादः प्रस्तूयते ग्राम्यकथाविघातः ।*
*विषेव्यमाणोऽनुदिनं मुमुक्षोर्मतिं सतिं यच्छति वासुदेवे ॥*

जहाँ सधैँ कीर्तन गान हुन्छ, दुस्सङ्ग यल्ले सब साफ धुन्छ ।
मुमुक्षुमा निर्मल भक्ति जाग्छ, विशुद्ध बुद्धि प्रभुतर्फ लाग्छ ॥

शब्दार्थ :– यत्र = जहाँ, उत्तमश्लोकगुणानुवादः = उत्तम यश भएका भगवान्को गुणवर्णन, प्रस्तूयते = प्रस्तुत गरिन्छ, ग्राम्यकथाविघातः = संसारी मायिक कुरालाई अर्थात् अज्ञानलाई नाश गर्ने, निषेव्यमाणः = नित्य निषेवित, अनुदिनम् = दिनैपिच्छे, मुमुक्षोः = मुमुक्षको, मतिम् = बुद्धिलाई, शुद्धम् = शुद्ध, यच्छति = लगाइन्छ, वासुदेवे = भगवान् वासुदेवमा ।

श्रीधर :– महत्सेवायास्तत्प्राप्त्युपायतामाह । यत्र येषु महत्सु, ग्राम्यकथानां विघातो यस्मात् ।

नेपालीमा अर्थ :– अत्यन्त पवित्र कीर्ति भएका भगवान्को कथा श्रवण र कीर्तन गर्दा अज्ञान नाश हुन्छ । सधैँ भगवान्को कथा सुन्दा मुमुक्षुको बुद्धिलाई यसले भगवान् श्रीवासुदेवमा लगाइदिन्छ ।

२७. *तस्मान्नरोऽसङ्गसुसङ्गजातज्ञानासिनेहैव विवृक्णमोहः ।*
*हरिं तदीहाकथनश्रुताभ्यां लब्धस्मृतिर्यात्यतिपारमध्वनाः ॥*

त्यसैहुँदा भक्त कुसङ्ग छोडी, बढोस् अगाडि हरिसङ्ग जोडी ।
ज्ञानासिले बन्धन मोह फारी, जाने छ नै भक्त तरेर पारी ।
राजन्! तिमी झट्पट सन्त खोज, छोडेर सारा हरिभक्ति रोज ॥

**शब्दार्थ :–** तस्मात् = त्यसकारण, नरः = मनुष्य, असङ्गसुसङ्गजातज्ञानासिना = ज्ञानी महापुरुषका उपदेशबाट प्राप्त ज्ञानरूपी तरबारले, इहैव = यही जन्ममा नै, विवृक्णमोहः = मोहको नाश गरेर, हरिम् = हरिलाई, तदीहाकथनश्रुताभ्याम् = भगवान्को कथा श्रवण र गुणानुवाद गरेर, लब्धस्मृतिः = स्वस्वरूपको स्मृति, याति = पाउँछ । अतिपारम् = पार तरेर, अध्वनः = बाटाको ।

**श्रीधर :–** असङ्गैर्महद्भिर्यः सुसङ्गेन जातं ज्ञानमेवासिंः खड्गस्तेन च्छिन्नमोहः सन् । अध्वनः संसारमार्गस्यातिशयितं श्रेष्ठं पारं हरिं याति । यद्वा पारमति अतिक्रम्य हरिं याति । तस्य हरेरीहानां कथनश्रुताभ्यां लब्धा स्मृतिर्येन सः ।

**नेपालीमा अर्थ :–** हे राजन् ! त्यसो हुँदा महात्माहरूका ज्ञानोपदेशद्वारा पाएको ज्ञानरूपी तरबारद्वारा मुमुक्षु मनुष्यले यसै जन्ममा नै आफ्नू मोहरूपी बन्धनलाई काट्नु आवश्यक छ । तदुपरान्त नै भगवान् श्रीहरिको कथास्मरण गर्दै त्यस्तो ज्ञानी मनुष्य यस असार तथा दुरन्तसंसारबाट सधैँका लागि मुक्त हुन्छ । ॐ ब्रह्मार्पणमस्तु ।



**यस कृतिमा परेका मन्त्रहरू**

१. **नेह नानास्ति** – बृ.उ.४।४।१९ (पृ.४)

२. **तमेतमात्मानम्** – बृ.उ.४।४।२२ (पृ.५)

३. **वाचारम्मणम्** – छा.उ. ६।१।१४ (पृ.२५)



*(द्रष्टव्य :– यो प्रसङ्ग श्रीमद्भागवतमहापुराणको पञ्चमस्कन्धको एघार र बाह्र अध्यायको ज्ञानी जडभरत र राजा रहूगणका बीचमा भएको संवादका सन्दर्भमा ब्रह्मज्ञानी जडभरतद्वारा जिज्ञासु राजा रहूगणलाई गरिएको ज्ञानोपदेशको केही अंशको संस्कृत श्लोकबाट समछन्दमा नेपालीमा गरिएको अनुवाद, श्रीधरीटीका, शब्दानुवाद र नेपालीमा अनुवाद हो ।)*



# २. गूढ उपदेश

उपदेश शब्द पाणिनीय व्याकरणको तुदादिमा रहेको अतिसर्जन अर्थात् दानार्थक दिश धातुबाट अगाडिपट्टि उप र पछाडिपट्टि घञ् प्रत्यय भएर बन्दछ । यसका अर्थहरू हुन्छन् – शिक्षण, अध्ययन, नसीहत, चेतावनी, निर्देशन, हित गर्ने कुराको शिक्षा, दीक्षागुरुले दिएको मन्त्र, विवरण, वहाना आदि । यस प्रकृत प्रसङ्गमा आएको श्रीमद्भागवातमहापुराणको षष्ठस्कन्धको पाँचौँ अध्यायको छैटौँ श्लोकदेखि १९औँ श्लोकसम्म देवर्षि नारदले दक्षका छोराहरूलाई गरेको यो अत्यन्त गूढ उपदेश हो । यो उपदेश रहस्यले भरिएको भएको हुँदा यहाँ उद्धरण गर्न लागिएको हो ।

राजा प्राचीनवर्हिका दशभाइ छोराहरू थिए । कठिन तपस्याबाट भगवान् श्रीनारायणलाई खुशी पारेर वरदान प्राप्त गरेर भगवान्कै आज्ञा अनुसार प्रम्लोचा नाम गरेकी अप्सराकी छोरी बार्क्षीसँग दशै जना दाजुभाइले विवाह गरेर पुत्र प्राचेतस दक्षको जन्म दिएका थिए । दक्षले प्रथमपटक हर्यश्व नाम भएका दश हजार छोरा जन्माएर सिन्धु नदी र समुद्रको सङ्गममा पर्ने नारायणसर नाम भएको महान् तीर्थमा तपस्या गर्न पठाएका थिए । पिताका आदेश अनुसार प्रजावृद्धिका लागि उग्र तपस्या गर्न तत्पर भएका ती दश हजार दक्षका

पुत्रहरूलाई देखेपछि नारदले उनीहरूलाई अत्यन्त गूढ तथा रहस्यपूर्ण प्रश्नहरू गरेका थिए । ती प्रश्नहरू अत्यन्त गूढ र अद्वैतवेदान्त सम्मत भएका हुँदा प्रश्नहरूका साथ तिनका उत्तरको पनि सङ्क्षेपमा यहाँ उल्लेख गरिनेछ । अत्यन्त गूढ प्रश्नहरू नारदजीले गर्नुभएको प्रश्न श्रीशुकदेव स्वामी राजा परीक्षित्लाई सुनाउँदै हुनुहुन्छ ।

१. *उवाच चाथ हर्यश्वाः कथं स्रक्ष्यथ वै प्रजाः ।*
*अदृष्ट्वान्तं भुवो यूयं बालिशा बत पालकाः ॥*

दक्षका पुत्र हर्यश्व ! रहेछौ मूर्ख बालक ।
नदेखी भूमिकै अन्त कहाँ छ सृष्टिको हक ?

शब्दार्थ :– उवाच = भने, च = पनि, अथ = हर्यश्वहरूलाई देखेर, हर्यश्वाः = हे हर्यश्वहरू हो ! कथम् = कसरी, स्रक्ष्यथ = सृष्टि गरौला, वै = निश्चय नै, प्रजाः = प्रजाहरू, अदृष्ट्वा = नदेखेर, अन्तम् = छेउ अर्थात् पुछारलाई, भुव = धरतीको, यूयम् = तिमीहरू, बालिशाः = अज्ञानी, बत = खेद छ, पालकाः = प्रजालाई पालन गर्ने ।

श्रीधर :– अहो कष्टं मोक्षमार्गाधिकारिणः सन्त एते प्रवृत्तिनिष्ठेः कर्मभिर्नश्येरन्निति कृपया तान्निगूढार्थैर्वाक्यै-रुपदिशतिस्म । तदाह उवाचेति चतुर्भिः । पालकाः सन्तोऽपि बालिशा अज्ञा यूयं कथं प्रजाः स्रक्ष्यथ । बतेदि खेदे ।

नेपालीमा अर्थ :– हे हर्यश्वहरू हो ! तिमीहरू दक्ष प्रजापतिका छोराहरू भएर के गर्ने ? वास्तवमा तिमीहरू अत्यन्त मूर्ख

रहेछौ । किनभने तिमीहरूले पृथ्वीको अन्त देखेकै छैनौ । पृथ्वीको इयत्ता नै थाहा नपाईकन पिता दक्षकै आदेश भए पनि तिमीहरू प्रजाको सृष्टि कसरी गर्दछौ ? तिमीहरूको यस्तो अवस्था देखेर मलाई तिमीहरूप्रति खेद प्रकट गर्न मन लागेको छ ।

२. *तथैकपुरुषं राष्ट्रं बिलं चादृष्टनिर्गमम् ।*
*बहुरूपां स्त्रियं चापि पुमांस पुंश्चलीपतिम् ॥*

यौटा पुरुष औ राष्ट्र अन्धो प्वाल दुनिर्गम ।
बहुरूपा छ जो नारी पुंश्चली पति दुर्गम ॥

शब्दार्थ :– तथा = त्यसरी, एकपुरुषम् = एउटै पुरुष भएको, राष्ट्रम् = राष्ट्रलाई, बिलम् = छिद्रलाई, च = पनि, अदृष्टनिर्गमम् = बाहिर जाने मार्ग नभएको, बहुरूपाम् = धेरै रूप भएकी, स्त्रियम् = नारीलाई, चापि = त्यसै गरेर, पुमांसम् = पुरुषलाई, पुंश्चलीपतिम् = वेश्याको पतिकन ।

श्रीधर :– एक एव पुरुषो यस्मिस्तद्राष्ट्रमदृष्ट्वत् इत्यनुषङ्गः । बिलं चेत्यादिद्वितीयान्तानामविज्ञाय कथं सर्गं करिष्यथेति तृतीयेनान्वयः ।

नेपालीमा अर्थ :– एउटा यस्तो राष्ट्र छ जसमा एउटा मात्रै पुरुष छ । जहाँ एउटी बहुरूपपिणी नारी छ । एउटा पुरुष छ जुन व्यभिचारिणी नारीको पति हो ।

३. *नदीमुभयतोवाहां पञ्चपञ्चाद्भूतं गृहम् ।*
*क्वचिद्धंसं चित्रकथं क्षौरपव्यं स्वयं भ्रमिम् ॥*

नदी दुईतिरै बग्छ घर पच्चीसतत्त्वको ।
अनौठो हंस हो चक्र घुंछ फन्न विचित्रको ॥

शब्दार्थ :– उभयतः = दुवैतर्फ, वाहाम् = बग्ने, नदीम् = नदीलाई, पञ्चपञ्चाद्भुतम् = पच्चीसतत्त्वले बनेको अनौठो गृहम् = घरलाई, चित्रकथम् = अनौठो कथा भएको, हंसम् = हाँसलाई, क्षैरपव्यम् = छुरा र वज्रले बनेको, स्वयं भ्रमिम् = आफैँ घुम्नेलाई, क्वचित् = कहिल्यै नजानेर

श्रीधर :– पञ्चपञ्चानां पञ्चविंशतेरद्भुतं गृहम् । क्षैरपव्यं क्षुरैः पथिभिर्वज्रैश्च निर्मितमिवातितीक्ष्णं दृढं चेत्यर्थः । स्वयं स्वतन्त्रम् भ्रमिं भ्रमणस्वभावम् ।

नेपालीमा अर्थ :– एउटा यस्तो नदी छ, जुन अगाडि र पछाडि दुवैतिर बग्दछ । एउटा यस्तो विचित्रको घर छ, जुन पच्चीस पदार्थहरूबाट बनेको छ । एउटा यस्तो हंस छ, जसको कहानी अत्यन्त अनौठाको छ । एउटा यस्तो चक्र छ, जुन धारिलो वज्रबाट बनेको छ, जुन स्वतः सधैँ घुमिरहन्छ ।

४. *कथं स्वपितुरादेशमविद्वाँसो विपश्चितः ।*
*अनुरूपमविज्ञाय अहो सर्गं करिष्यथ ॥*

हे बालक ! सबै मैले भनेको नबुझीकन ।
गर्दछौ कसरी सृष्टि पितृ आदेशले भन ?

शब्दार्थ :– कथम् = कसरी, स्वपितुः = बाबु दक्षको, आदेशम् = आज्ञालाई, अविद्वांसः = अज्ञ, विपश्चितः = विद्वान्, अनुरूपम् = सही अर्थ भएको, अविज्ञाय = नबुझीकन, अहो =

आश्चर्य, सर्गम् = सृष्टि, करिष्यथ = गर्नेछौ ।

श्रीधर :– विपश्चितः सर्वज्ञस्य स्वपितुरादेशमात्मनोऽनुरूप-मविद्वांसोऽजानन्तः पूर्वोक्तं चैकरूपं राष्ट्रमित्याद्यविज्ञायाहो कथं सर्गं करिष्यथेत्यन्वयः ।

नेपालीमा अर्थ :– हे अदूरदर्शी राजकुमारहरू हो ? जब मैले भनेका यी कुराहरू थाहा नपाईकन तिम्रा दक्ष पिताले दिएको आदेश अनुसारको सृष्टि कसरी गर्न सक्तछौ ? किन्तु सक्तैनौ । अतः मेरा प्रश्नहरूको उत्तर खोज्ने प्रयास गर ।

श्रीशुकदेवस्वामी भन्नुहुन्छ –

५. *तन्निशम्याथ हर्यश्वा औत्पत्तिकमनीषया ।*
*वाचःकूटं तु देवर्षेः स्वयं विममृषुर्धिया ॥*

यो सुनेपछि आफैँमा गरी विमर्श तत्क्षण ।
गूढार्थको गरे खोजी सबै थिए विचक्षण ॥

शब्दार्थ :– तत् = त्यो, निशम्य = सुनेर, अथ = त्यसपछि, हर्यश्वाः = हर्यश्वहरूले, औत्पत्तिकमनीषया = जन्मजात बुद्धि भएका, वाचःकूटंतु = रहस्ययुक्त भनाइलाई, देवर्षेः = नारद मुनिको, स्वयम् = आफैँ, विममृशुः = विचार गर्न लागे, धिया = आफ्नो बुद्धिले ।

श्रीधर :– वाचः कूटम् = परोक्षवादेनार्थान्तरमिव प्रतीयमानं वचनम् । औत्पत्तिकी सहजा मनीषा विचारशक्तिर्यस्यास्तया धिय स्वयमेव विममृशुर्विचारितन्वन्तः ।

नेपालीमा अर्थ :– हे परीक्षित् ! हर्यश्वहरू जन्मदेखि नै

अत्यन्त बुद्धिमान् थिए । देवर्षि नारदजीको अत्यन्त रहस्ययुक्त गूढ वचन सुनेपछि आफ्नै बुद्धिले आपस आपसमा विचार विमर्श गर्न थाले ।

६. *भूः क्षेत्रं जीवसंज्ञं यदनादि निजबन्धनम् ।*
*अदृष्ट्वा तस्य निर्वाणं किमसत्कर्मभिर्भवेत् ॥*

लिङ्गशरीर हो जीव उपाधि आत्मबन्धन ।
नजानी यसको मोक्ष के गर्ने कर्म यो भन ॥

शब्दार्थ :– भूः = पृथिवी, क्षेत्रम् = स्थान, जीवसंज्ञम् = जीव नामधारी सूक्ष्मशरीरको, यत् = जुन, अनादि = पहिलेको, निजबन्धनम् = जीवात्माको वन्धन हो । अदृष्ट्वा = थाहा नभईकनै, तस्य = त्यस लिङ्गशरीरको, निर्वाणम् = मुक्ति, किम् = कसरी, असत्कर्मभिः = काम्य कर्महरूबाट, भवेत् = हुनसक्ला ।

श्रीधर :– नारदोक्तदशवाक्यानां तैर्विमृश्य निर्णीतानर्थानाह दशभिः । अदृष्ट्वान्तं भुव इत्यत्र भूशब्दार्थमहभूमिरिति क्षेत्रं तच्चात्र जीवसंज्ञं लिङ्गशरीरम् । यन्निजबन्धनमात्मनो बन्धकारणम् । अन्तशब्दार्थमाह । निर्वाणं नाशम् । असद्‌-भिर्मोक्षानुपयोगिभिः कर्मभिः किं भवेन्न किमपि ।

नेपालीमा अर्थ :– देवर्षि नारदजीको रहस्यमय उपदेशको अर्थ खोज्ने प्रयास गर्दै दक्षपुत्रहरू विचार गर्दछन् – यस लिङ्ग शरीरलाई नै सामान्यरूपमा आत्मा भन्ने गरिन्छ । मायाका विकार पञ्चभूत आदि नै आत्माका उपाधि हुन् र यी अनादि बन्धन पनि हुन् । यस उपाधिको नाश गर्नुको प्रतिकूल मोक्षका

लागि कत्ति पनि काम नलाग्ने यो सकाम प्रजा उत्पादन गर्ने काम गरेर कुनै फाइदा छैन। अर्थात् यस कर्मबाट श्रेयोमार्ग बन्द भएर जान्छ। मोक्षको द्वार खुल्न सक्तैन। उपनिषद्ले भनेको पनि छ – *'पूर्वे विद्वांसः प्रजां न कामयन्ते किं प्रजया करिष्यामो येषां नोऽयमात्मायं लोक इति'* (बृ.उ. ४।४।२२) अर्थात् पूर्ववर्ती विद्वान्हरू सन्तान उत्पादन आदि सकाम कर्मको इच्छा गर्दैनथे। तिनीहरू शोच्तथे कि हामीहरूलाई प्रजा अर्थात् सन्तानबाट के प्राप्त गर्नु छ ? हामीलाई आत्मलाभ गरेर अर्थात् ब्रह्मज्ञान गरेर मायाको बन्धनबाट मुक्त हुनुछ।

७. *एक एवैश्वरस्तुर्यो भगवान् स्वाश्रयः परः।*
*तमदृष्ट्वाभवं पुंसः किमसत्कर्मभिर्भवेत् ॥*

जाग्रदादि सबै माथि बस्छ जो साक्षी भैकन।
उसैलाई नअर्पेको कर्मले हुन्छ ? के भन ?

**शब्दार्थ :–** एक एव = एउटै, ईश्वरः = ईश्वर, तुर्यः = साक्षी भगवान् = भगवान्, स्वाश्रयः = आफैँमा आश्रय भएको, परः = प्रकृतिभन्दा माथि, तम् = त्यसलाई, अदृष्ट्वा = नदेखीकन, अभवम् = नित्य, पुंसः = पुरुषको, किम् = के काम, असत्कर्मभिः = सकाम कर्महरूबाट, भवेत् = हुन्छ।

**श्रीधर :–** एकपुरुषमिति अस्य अर्थमाह एक एवेति। तुर्यः सर्वसाक्षी। स्वाश्रयः स्वाधारः। अभवं नित्यमुक्तम्। असद्भिरीश्वरासमर्पितैः कर्मभिः।

**नेपालीमा अर्थ :–** वस्तुतः ईश्वर एउटै छ। त्यो जाग्रद्

आदि तीनै अवस्थाहरू र तिनका अभिमानी विश्व, तैजस, प्राज्ञ आदि भन्दा भिन्नै ती सबैको साक्षी तुरीय हो। ऊ नै सबैको आश्रय हो र उसको आश्रय कोही पनि छैन। त्यही नै भगवान् हो। प्रकृति आदि सबैबाट अतीत र नित्यमुक्त त्यस परमात्मालाई नजानीकन र उसैलाई अर्पण नगरीकन सकाम कर्मबाट केही हुँदैन। अतः यसप्रकारको कर्म गर्नु अकार्थ हो।

८. *पुमान् नैवैति यद्गत्वा बिलस्वर्गं गतो यथा।*
*प्रत्यग्धामाविद इह किमसत्कर्मभिर्भवेत्॥*

जीव जान्छ र फर्कन्न छ मुक्ति आत्मज्ञानले।
नजाने जन्म भो व्यर्थ के हुन्छ तुच्छ कर्मले ?

शब्दार्थ :– पुमान् = पुरुष, न एव एति = फेरि जन्म लिँदैन। यत् = जुन, गत्वा = गएर, बिलस्वर्गम् = पाताल, गतः = गएको, यथा = झैँ, प्रत्यग्धाम = त्यस परमात्मालाई, अविदः = नजान्ने, इह = यहाँ, किम् = के प्रयोजन, असत्कर्मभिः = स्वर्गादि फल भएका कर्महरूले, भवेत् = हुन्छ।

श्रीधर :– बिलं चादृष्टनिर्गममित्यस्यार्थमाह – पुमान् यद्गत्वा प्राप्य बिलस्वर्गं पातालं गत इव नैवैति नावर्तते तत् प्रत्यग्धाम ज्योतिरूपं ब्रह्म। अविद्योऽविदुषः, असद्भिर्नश्वर-स्वर्गादिसाधनैः कर्मभिः।

नेपालीमा अर्थ :– जसरी मनुष्य बीलस्वरूप पाताल गएपछि फेरि फर्कँदैन। त्यसैगरेर आत्मज्ञान गरेको जीव ब्रह्म नै हुन्छ। फेरी संसारमा आउँदैन। आफैँ जीव अन्तर्ज्योतिस्वरूप

हो। किन्तु आफ्नै अविनाशी स्वरूप आत्मालाई नजानीकन नाशवान् स्वर्ग आदि फल दिने काम्य कर्म गर्नाले के लाभ हुन्छ र गर्ने ?

९. *नानारूपाऽऽत्मनो बुद्धिः स्वैरिणीव गुणान्विता।*
*तन्निष्ठामगतस्येह किमसत्कर्मभिर्भवेत्॥*

स्वैरिणी बुद्धि हो आफ्नै सत्त्वादिगुणकी धनी।
यस्कै अन्त नजानेमा के हुन्छ ? कर्मले पनि॥

शब्दार्थ :– स्वैरिणी इव = वेश्या जस्ती, नानारूपा = धेरै रूप भएकी, आत्मनः = जीवात्माको, बुद्धिः = बुद्धि, गुणान्विता = धेरै थरी गुणहरू भएको, तन्निष्ठाम् = त्यसको आश्रय विवेकलाई, अगतस्य = प्राप्त नगरेको, इह = यस लोकमा, असत्कर्मभिः = खराब कर्महरूबाट, किं भवेत् = के हुन्छ ?

श्रीधर :– बहुरूपां स्त्रियमित्यस्यार्थमाह – नानारूपेति स्वैरिणीव पुंश्चलीव विमोहकै रजआदिगुणैरन्विता। तन्निष्ठां तस्या अवसानं विवेकमगतस्याप्राप्तस्य। असद्भिरशान्तैः।

नेपालीमा अर्थ :– सत्त्व, रज र तमो गुणलाई धारण गर्ने भएकी यो आफ्नै बुद्धि नै व्यभिचारिणी स्त्रीकी समान हो। यस जीवनमा उपाधिरूप यस त्रिगुणात्मिका बुद्धिको ब्रह्मज्ञानद्वारा नाश नगरेसम्म सधैँ अशान्ति र संसारको बन्धन बढाउने सकाम कर्म गरेर कुनै फाइदा छैन।

१०. *सत्सङ्गभ्रंशितैश्वर्यं संसरन्तं कुभार्यवत्।*
*तद्गतीरबुधस्येह किमसत्कर्मभिर्भवेत्॥*

कुलटा सरिकी बुद्धि जीवात्मा पतितुल्य हो ।
जीवको दुर्दशा गर्छे उस्कै सन्तान कर्म हो ॥

शब्दार्थ :– सत्सङ्गभ्रंशितैश्वर्यम् = बुद्धिका सङ्गतले ऐश्वर्य नाश भएको, संसरन्तम् = आउने र जाने गर्ने, कुभार्यवत् = व्यभिचारिणी पत्नीको पति जस्तो, तद्गति = उसकै स्वभाव पाएर, अबुधस्य = अज्ञानीको, इह = यस संसारमा, किम् = के, असत्कर्मभिः = बन्धनकारक कर्महरूद्वारा, भवेत् = होला ।

श्रीधर :– पुमांसं पुंश्चलीपतिमित्यस्यार्थमाह । तस्याः सङ्गेन भ्रंशितमैश्वर्यं स्वातन्त्र्यं यस्य । कुत्सिता भार्या यस्य तद्वत् तस्या गतीः सुखदुःखलक्षणाः । संसरन्तं गच्छन्तं जीवमबुधस्याजानतः । असद्भिर्बुद्ध्यविवेकप्राप्तैः ।

नेपालीमा अर्थ :– यो बुद्धि वेश्या नारी जस्ती हो । यसका कुसङ्गतले जीवरूप पुरुषका ऐश्वर्य अर्थात् यसको असली ब्रह्मस्वरूप नष्ट जस्तो भएको छ । जीवात्मा यसै बहुरूपिणी बुद्धिका पछि लागेर अनन्त जन्मदेखि यस असार संसारमा विभिन्न योनिहरूमा घुमिरहेको छ । यस बहुरूपिणी मायिक बुद्धिको असत्यरूपलाई नजानीकन यो विवेकरहित असत् कर्म गरेर के लाभ हुन्छ ?

११. *सृष्टय्प्ययकरीं मायां वेलाकूलान्तवेगितम् ।*
*मत्तस्य तामविज्ञस्य किमसत्कर्मभिर्भवेत् ॥*

माया बग्छे दुवैतर्फ सृष्टि नाश सधैँ गरी ।
आत्मज्ञान हुनै दिन्न के हुन्छ ? कर्म यो गरी ॥

शब्दार्थ :– सृष्टचप्ययकरिम् = संसारको सृष्टि र संहार गर्ने, मायाम् = मायालाई, वेलाकुलान्तवेगितम् = दुवैतर्फ बग्ने, मत्तस्य = मातेको, ताम् = त्यो, अविज्ञस्य = मूर्खको लागि, असत्कर्मभिः = मायिक कर्मबाट, किम् = के, भवेत् = हुन्छ ।

श्रीधर :– नदीमुभयतोवाहामित्यस्यार्थमाह । सृष्टचपयौ करोतीत्युभयतः प्रवाहो दर्शितः । वेला कूलं प्रवाहपतितानां निर्गमस्थानं तपोविद्यादि तस्यान्ते समीपे वेगितां निर्गम–प्रतिबन्धाय क्रोधाहङ्कारादिभिः कृतवेगाम् । मत्तस्य तद्वेगेन विवशस्य । अत एव तां तथाभूतामविज्ञस्याविचारयतं असद्भिर्मायिकैः यद्वा वेलाकूलं समुद्रस्य व्यवहारस्थानं तस्य समीपे समुद्रवृद्धिह्रासाभ्यां यथोभयतोऽन्तर्बहिः कृतवेगा नदी भवत्येवं समुद्रतुल्यस्यात्मनो व्यवहारस्थाने देहे जन्ममरणादिभिः कृतवेगामित्यर्थः वेगिनीमिति पाठे वेगवतीम् ।

नेपालीमा अर्थ :– माया नै दुवैतिर बग्ने नदी हो । यसले सृष्टि र संहार दुवै गर्दछे । जसले यसबाट पिण्ड छुटाउन सात्त्विकतपस्या आदि गर्ने प्रयास गर्दछन्, त्यसबाट उनीहरूलाई रोक्नका लागि क्रोध, अहङ्कार आदिका रूपमा देखा पर्दछे र विघ्न गर्दछे । जो जो मनुष्यहरू मायाको यस कुटिल चालबाट अनभिज्ञ छन्, त्यस मायिक कर्मबाट के लाभ हुन्छ ?

१२. *पञ्चविंशति तत्त्वानां पुरुषोऽद्भुतदर्पणम् ।*
*अध्यात्ममबुधस्येह किमसत्कार्यभिर्भवेत् ॥*

पच्चीस तत्त्वका गेह भित्र बस्तछ ईश्वर ।
उसैलाई नजानेर कर्मले हुन्छ के ? तर ॥

**शब्दार्थ :–** पञ्चविंशतितत्त्वानाम् = पच्चीस तत्त्वहरू मिलेर बनेको घर, पुरुषः = ईश्वर, अद्भूतदर्पणम् = आश्चर्य लाग्दो आश्रयः, अध्यात्मम् = परमेश्वरलाई, अबुधस्य = अज्ञानीको, इह = यस जगत्मा, असत्कर्मभिः = तुच्छ कर्महरूद्वारा, किं भवेत् = के हुन्छ ?

**श्रीधर :–** पञ्चपञ्चेत्यस्यार्थमाह । पञ्चविंशतितत्त्वानां पुरुषोऽन्तर्यामी । अद्भूतदर्पणमाश्चर्यरूप आश्रयः । अध्यात्मं कार्यकारण सङ्घाताधिष्ठातारम् । तमबुधस्य । असद्भिर्मिथ्या-स्वातन्त्र्यकृतैः ।

**नेपालीमा अर्थ :–** यी पच्चीस तत्त्व नै अद्भुत घर हो । पुरुष ती तत्त्वहरूको आश्चर्यमय आश्रय हो । ऊ नै समस्त कार्यकरणात्मक जगत्को अधिष्ठाता हो । यसकुरालाई कत्ति पनि नजानीकन यस प्रकारको मायिक काम गरेर के प्राप्ति हुन्छ ?

१३. *ऐश्वरं शास्त्रमुत्सृज्य बन्धमोक्षानुदर्शनम् ।*
*विवित्तपदमज्ञाय किमसत्कर्मभिर्भवेत् ॥*

ब्रह्मविज्ञान हो विद्या जो छ अज्ञान नाशक ।
सोही विद्या नजानेर के गर्नु कर्म ? नाहक ॥

**शब्दार्थ :–** ऐश्वरम् = ईश्वरको ज्ञान गराउने, शास्त्रम् = शास्त्रलाई, उत्सृज्य = छोडेर, बन्धमोक्षानुदर्शनम् = बन्धन र मोक्ष देखाउने, विवित्तपदम् = नित्य र अनित्यलाई छुटचाउने कुरा, अविज्ञाय = नजानीकन, किम् = के, असत्कर्मभिः =

अनित्य कर्मबाट, भवेत् = होला ।

श्रीधर :– क्वचिद्‌धंसमित्यस्यार्थमाह । उमेश्वरमीश्वर-प्रतिपादकम् । विविक्तं पदं चिज्जडरूपं वस्तु येनेतिहंसपद-व्याख्यानम् । बन्धमोक्षावनुदर्शयतीति तथा । अनेन चित्राः कथा यस्येति व्याख्यातम् । तदसृज्यानभ्यस्य अज्ञायाविदुषः । असद्‌भिबहिर्मुखैः ।

नेपालीमा अर्थ :– भगवान्‌को स्वरूपको ज्ञान गराउने शास्त्रले हंसका सरह नित्यानित्य विवेक गर्ने विवेक दिन्छ । शास्त्र बन्ध, मोक्ष, चेतन र जडलाई राम्रोसँग छुटयाएर देखाइदिन्छ । यसप्रकारका अध्यात्मशास्त्रलाई नजानीकन र उसको आश्रय नलिईकन, उसको आश्रयविना बहिर्मुख बनाउने यस्तो संसारी सकाम कर्म गरेर के हुन्छ ?

१४. *कालचक्रं भ्रमिस्तीक्ष्णं सर्वं निष्कर्षयज्जगत् ।*
*स्वतन्त्रमबुधस्येह किमसत्कर्मभिर्भवेत् ॥*

कालचक्र छ दुर्जेय यो घुम्दछ सधैँभरि ।
यसैलाई नजानेर के हुन्छ कर्म यो गरी ॥

शब्दार्थ :– कालचक्रम् = कालरूपी चक्रलाई, भ्रमि = घुम्ने, तीक्ष्णम् = तीखो, सर्वम् = सबै, निष्कर्षत् = तान्ने, जगत् = संसारलाई, स्वतन्त्रम् = स्वतन्त्र, अबुधस्य = अज्ञानीको, इह = यहाँ, असत्कर्मभिः = अनित्य कर्मद्वारा, किम् = के ।

श्रीधर :– क्षौरपव्यमित्यस्यार्थमाह कालचक्रमिति । भ्रभिर्भ्रमणात्मकम् । तीक्षणमिति निष्कर्ष यदिति च क्षौरपव्यपदं

व्याख्यातम् । तदबुधस्यात एव फलस्य नित्यबुद्धया काम्य-कर्मानुष्ठाने वैगुण्यबाहुल्यादसद्भिः ।

नेपालीमा अर्थ :– यो काल नै चक्र हो । यो निरन्तर घुमिरहन्छ । यसका धार छुरा र वज्रका जस्ता धारिला छन् । यस चक्रले सम्पूर्ण जगत्लाई आफूतर्फ तानिरहेको छ । यसलाई नियन्त्रण गर्ने कोही पनि छैन र यो परम स्वतन्त्र छ । यो कुरा नै नजानीकन कर्मको फललाई नित्य सम्झेर जसले सकाम भावनाले कर्म गर्दछ भने त्यस्तो अनित्य कर्म गरेर के लाभ ?

१५. *शास्त्रस्य पितुरादेशं यो न वेद निवर्तकम् ।*
*कथं तदनुरूपाय गुणविश्रम्भ्युपक्रमेत् ॥*

पिता नै शास्त्र हो यल्ले दोस्रो जन्म गराउँछ ।
निवृत्ति मार्ग देखाई काम्यकर्म भगाउँछ ॥

शब्दार्थ :– शास्त्रस्य = शास्त्रको, पितुः = बाबुको, आदेशम् = आदेशलाई, यः = जसले, न वेद = जान्दैन, निवर्तकम् = निवृत्तिरूप, कथम् = कसरी, तदनुरूपाय = त्यस अनुरूप, गुणविश्रम्भी = प्रवृत्तिमार्गलाई विश्वास गर्ने मान्छेले, उपक्रमेत् = गर्नसक्तछ ।

श्रीधर :– शास्त्रस्य स्वपितुर्द्वितीयजन्महेतोः । तदनुरूपाय = निवृत्त्यनुरूपाय निवर्तकमादेशं यो न वेद स कथं गुणविश्रम्भी गुणमयप्रवृत्तिमार्गविश्वासवाननुपक्रमेत्सृष्ट्यादौ प्रवर्तेत । 'मोक्षेशब्रह्मबुद्धिनां जीवमायान्तरात्मनाम् । शास्त्रकालोपदेशेनाम-ज्ञाने किमु कर्मभिः ।' इति वाचः कूटसङ्ग्रहश्लोकः ।

नेपालीमा अर्थ :– शास्त्र नै पिता हो । किनभने दोस्रो जन्म शास्त्रद्वारा नै हुन्छ । शास्त्रको आदेश कर्ममा लाग्नु होइन । शास्त्रले कर्मबाट निवृत्त हुन सिकाउँछ । यस कुरााई जसले जान्दैन र गुणमय शब्द आदि विषयहरूमा विश्वास गर्दछ । यस्तो अवस्थामा कर्ममा प्रवृत्त हुने आज्ञालाई कसरी पालना गर्न सकिन्छ ?

१६. *इति व्यवसिता राजन् हर्यश्वा एकचेतसः ।*
*प्रययुस्तं परिक्रम्य पन्थानमनिवर्तनम् ॥*

प्रवृत्ति मार्ग छोडेर परिव्राजक ती बनी ।
लागे निवृत्तिको बाटो फर्केनन् कहिल्यै पनि ॥

शब्दार्थ :– इति = यसरी, व्यवसिता = निश्चय गरेर, राजन् = हे परीक्षित् ! हर्यश्वाः = हर्यश्वहरू, एकचेतसः = एकै मत भएर, प्रययुः = हिंडे, तम् = नारदमुनिलाई, परिक्रम्य = परिक्रमा गरेर, पन्थानम् = बाटोमा, अनिवर्ततनम् = संसारमा फेरि नफर्कने गरी ।

श्रीधर :– इति व्यवसिता एवं निश्चितवन्तः । एकचेतस एकमत्ययुक्ताः । तं नारदं प्रदक्षिणीकृत्वापुनरावृत्तिमार्गं प्रययुः ।

नेपालीमा अर्थ :– हे राजन् ! दक्षका छोरा हर्यश्वहरू सबै एकमत भएर निश्चय गरे र देवर्षि नारदजीको पूजा परिक्रममा गरेर उनीहरू मोक्षमार्गको पथिक बने । जुन मार्गमा लागेपछि फेरि यस संसारमा फर्कनु पर्दैन ।

त्यतिमात्रै होइन दक्षले फेरि जन्माएर तपस्या गर्न नारायण

सरमा नै पठाएका शबलाश्व आदि नाम भएका अरू एक हजार छोराहरूलाई पनि देवर्षि नारदले दाजुहरूकै बाटो देखाएर फेरि नफर्कने बाटोमा पठाइदिनुभयो ।

उपर्युक्त अनुसार देवर्षि नारदको कूट वचन अर्थात् गूढ उपदेश सुनेपछि प्रजापति दक्षका हर्यश्व आदि छोराहरू सन्तान उत्पादन गर्ने आदि प्रवृत्ति मार्गलाई चटक्कै त्यागेर निवृत्तिमार्ग अर्थात् मोक्षमार्गतिर लागे । *'यदहरेव विरजेत् तदहरेव प्रव्रजेत्'* जुन समयमा वैराग्य उत्पन्न हुन्छ त्यसै समयमा तुरुन्तै मोक्षमार्ग समातोस् भन्ने श्रुतिवचन अनुसार फेरि कहिल्यै पनि यस असार संसारमा फर्कनु नपर्ने बाटोका पथिक भएर उनीहरू गए ।

उपर्युक्त अनुसार देवर्षि नारदबाट भएको गूढ उपदेशको सार यसप्रकार छ –

१. पहिलो प्रश्न – भूमिको अन्त कहाँ छ ? त्यसको छोटो उत्तर हो १७ कलाले बनेको सूक्ष्म वा लिङ्ग शरीर ।
२. दोस्रो प्रश्न – एउटै पुरुष भएको राष्ट्र कुन हो ? त्यसको उत्तर हो – परमात्मा परब्रह्म ।
३. तेस्रो प्रश्न हो – एउटा प्वाल छ जसमा पसेपछि निस्कने ठाउँ छैन, त्यो के हो ? उत्तर हो – स्वयम्प्रकाश ब्रह्मतत्त्व ।
४. चौथो प्रश्न हो – व्यभिचारिणी बहुरूपिणी स्त्री भनेकी के हो ? उत्तर हो – बुद्धि वा माया ।
५. पाँचौँ प्रश्न हो – व्यभिचारिणी बहुरूपिणी स्त्रीको पति भनेको के हो ? उत्तर हो – जीवात्मा ।
६. छैटौँ प्रश्न हो – दुवैतिर बग्ने नदी भनेको के हो ? त्यसको

उत्तर हो – माया हो, जसले जगत्‌को सृष्टि र प्रलय दुबै कुरा गर्दछे ।

७. सातौँ प्रश्न हो – पच्चीस तत्त्वले बनेको घर भनेको के हो ? यसको उत्तर हो – शरीर ।

८. आठौँ प्रश्न हो – विचित्र आवाज भएको हाँस भनेको के हो ? उत्तर हो – शास्त्र ।

९. नवौँ प्रश्न हो – वज्र जस्तो सुदृढ र आफैँ घुम्ने चक्र भनेको के हो ? उत्तर हो – काल ।

माथिका प्रश्नहरूको उत्तर नजानीकनै सम्पादन गरिएका कर्महरू असत् वा व्यर्थ हुन् । अतः सबै बुझेर मात्रै कर्म गरेमा मोक्षका साधन बन्दछन् र नबुझीकनै गरिएका काम्य कर्महरू जीवका बन्धन बन्दछन् भन्ने देवर्षि नारदजीका गूढ उपदेशको रहस्य हो ।

यसै कुरालाई श्रुतिहरूले एकमतले घोषणा गरेका छन् । जस्तै – 'तेषां न पुनरावृत्ति' (बृ.उ.६।२।१५) अर्थात् तिनीहरूको पुनरावृत्ति हुँदैन । फेरि फर्किएर आउनुपर्दैन । *'एतेन प्रतिपाद्यमाना इमं मानवमावर्तं नावर्तन्ते' (छा.उ.४।१५।१)* अर्थात् यस मार्गबाट जानेहरू यस मर्त्यलोकमा फेरि फर्किँदैनन् । *'ब्रह्मलोकमभिसम्पद्यते न च पुनरावर्तते' (छा.उ.८।१५।१)* अर्थात् ब्रह्मलोक गएको मुक्तात्मा फेरि फर्केर आउँदैन । श्रीमद्‌भगवद्‌गीतामा पनि भगवान् श्रीकृष्णले सोही कुरा भन्नुभएको छ । जस्तै – *'यं प्राप्य न निवर्तन्ते तद्‌धाम परमं मम ।' (गीता ८।२१)* अर्थात् जहाँ गएपछि फेरि फर्कनु पर्दैन, त्यही मेरो धाम हो ।

भगवान् फेरि भन्नुहुन्छ – *"आब्रह्मभुवनाल्लोका पुनरा-वर्तिनोऽर्जुन। मामुपेत्य तु कौन्तेय पुनर्जन्म न विद्यते॥"* *(गीता ८।१६)* अर्थात् हे अर्जुन ! ब्रह्मलोकदेखि लिएर अरू लोकहरूमा गएका जीवहरू फेरि फर्केर संसारमा नै आउनु पर्दछ। किन्तु ब्रह्मस्वरूपमा प्राप्त भएपछि भने फेरि फर्किएर यस संसारमा आउनु पर्दैन।

ब्रह्मसूत्रको अन्तिम सूत्रमा यिनै कुराहरूलाई समेटेर भगवान् वेदव्यासले यहाँ नफर्कने कुरा भन्नुभएको छ – *'अनावृत्ति शब्दात्'* *(ब्र.सू. ४।४।२२)* यो सूत्रको भाष्य गर्दै आचार्य श्रीशङ्करले विशद चर्चा गर्नुभएको छ। यस सूत्रको आशय अत्यन्त स्पष्ट छ। आर्चिरादि मार्गबाट गएका ब्रह्मज्ञानीको पुनरावृत्ति हुँदैन। किनभने छान्दोग्य श्रुतिले *'न च पुनरावर्तते'* र बृहदारण्यकोपनिषद्ले *'तेषां न पुनरावृत्ति'* अर्थात् क्रममुक्तिमा ब्रह्मलोक पुगेको मुमुक्षु ब्रह्मज्ञानी फेरि संसारमा फर्कँदैन भनेको छ। अतः निवृत्तिमार्गद्वारा मोक्ष मार्गमा लागेको मान्छेको मुक्ति अवश्य हुन्छ। यसरी दक्षका एघारहजार पुत्रहरू मुक्त भए। ॐ ब्रह्मार्पणमस्तु।



## यस कृतिमा परेका मन्त्रहरू

१. पूर्वे विद्वांसः – बृ.उ.४।४।२२ (पृ.३८)
२. एतेन प्रतिपाद्यमाना – छा.उ. ४।१५।१ (पृ.४८)
३. ब्रह्मलोक मभिसम्पद्यते – छा.उ.८।१५।१ (पृ.४८)
४. तेषां न पुनरावृत्तिः – बृ.उ.६।२।१५ (पृ.४९)
५. यं प्राप्य न निवर्तन्ते – गीता ८।२१ (पृ.४८)
६. आब्रह्मभुवनाल्लोका – गीता ८।१६ (पृ.४८)
७. अनावृत्ति शब्दात् – ब्रह्मसूत्रम् ४।४।२२ (पृ.५९)



# ३. येन चेतयते विश्वम्

आदिराज स्वायम्भुव मनुलाई तीव्र वैराग्य उदय भएपछि उहाँ आफ्नू सुखसयल र राजपाट समेतको त्याग गरेर आफ्नी धर्मपत्नी शतरूपालाई साथमा लिएर तपस्या गर्न वनमा जानुभयो। उहाँले सुनन्दा नदीको किनारामा बसेर तपस्या गर्नुभयो। तपस्या गर्दा पृथ्वीमा एउटा मात्र खुट्टा टेकेर एक सय वर्षसम्म घोर तपस्या गर्नुभयो। तपस्या गर्दाखेरि उहाँ प्रतिदिन यसरी भगवान्को स्तुति गर्नुहुन्थ्यो।

१. *येन चेतयते विश्वं विश्वं चेतयते न यम्।*
*यो जागर्तिशायनेऽस्मिन्नायं तं वेद वेद सः॥*

सत्ता पाएर नै जस्को जड चेतन बन्दछ।
सुषुप्ति आदिको साक्षी उही नै ब्रह्म बन्दछ॥

शब्दार्थ :– येन = जुन परमात्माद्वारा, चेतयते = चेतन हुन्छ, विश्वम् = संसार, विश्वम् = त्यसै संसारले भने, न चेतयते = चेतन बनाउन सक्तैन, यम् = जसलाई, यः = जो, जागर्ति = जागिरहन्छ, शयाने = निदाउँदा, अस्मिन् = यस संसारमा, अयम् = यसले वा यो, न वेद = जान्दैन, सः = उसले, वेद = जान्दछ।

श्रीधर :– येन चिदात्मना विश्वं चेतयते चेतनी भवति।

विश्वं तु यं न चेतयते न चेतनीकरोति । स्वत एव चिद्रूपत्वात् । तत्र हेतुः अस्मिन् शयाने स्वपति यो जागर्ति साक्षितया वर्तते । अहो चित्रं नायं जनस्तं वेद । न तु इमं वेद ।

नेपालीमा अर्थ :– जसको चेतनाको स्पर्शमात्रले यो जड विश्व चेतनायुक्त बन्दछ । परन्तु यो विश्व जसलाई चेतना प्रदान गर्न सक्तैन । जुन परमात्मा विश्व सुतेपछि पनि सुषुप्तिमा अथवा प्रलयपछि पनि साक्षीका रूपमा जागा नै रहन्छ । जसलाई जान्न सकिँदैन, त्यही नै परमसत्य अर्थात् परं ब्रह्म हो ।

२. *आत्मावास्यमिदं विश्वं यत् किञ्चिज्जगत्यां जगत् ।*
*तेन त्यक्तेन भुञ्जीथा मा गृधः कस्यस्विद्धनम् ॥*

यो विश्व जति हो सारा ब्रह्मबाटै छ आप्लुत ।
छोड संसारको तृष्णा उस्कै हो सव वस्तुतः ॥

शब्दार्थ :– इदम् = यो, विश्वम् = संसार, जगत्याम् = संसारमा रहने, यत्किञ्चित् = जो जति पनि, जगत् = प्राणीहरू छन् ती, आत्मावास्यम् = परमेश्वरद्वारा आच्छन्न छन्, तेन = त्यसैले, त्यक्तेन = समर्पण गरेर मात्रै, भुञ्जीथाः = भोग गर, कस्यचित् = जो कसैको पनि, धनम् = धनमा, मागृधः = आँखा न लगाऊ ।

श्रीधर :– तस्येश्वरत्वं दर्शयन् लोकस्य हितमुपदिशति आत्मना ईश्वरेणावास्यं सत्ताचैतन्याभ्यां संव्याप्यं विश्वं सर्वं जगत्यां लोके यत्किञ्चिज्जगद्भूतजातं अतस्तेनैवेश्वरेण यत्किञ्चित्त्यक्तं दत्तं धनं तेनैव भुञ्जीथाः भोगान्भुङ्क्ष्व । यद्वा तेन हेतुना

त्यक्तेनेश्वरार्पणेन भुञ्जीथा न स्वार्थम् । कस्यस्वित्कस्यचिदपि धनं मा गृधो माऽभिकाङ्क्षी । यद्वा कस्यस्विदिति कस्यान्यस्य धनमस्ति, यतो धनकाङ्क्षा क्रियेतेत्यर्थः । तथा च श्रुतिः – '*ॐ ईशा वास्यमिदं सर्वं यत्किञ्च जगत्यां जगत् । तेन त्यक्तेन भुञ्जीथा मा गृधः कस्यस्विद्धनम् ॥' (ईशावास्योपनिषद् १)*

नेपालीमा अर्थ :– यो सम्पूर्ण विश्व र यस विश्वमा बस्ने सम्पूर्ण चराचर परब्रह्मबाटै ओतप्रोत छ । यसै कारण संसारका कुनै पनि पदार्थमा मोह नगरेर त्यसलाई त्याग गर्दै जीवन निर्वाहका लागिमात्र उपभोग गर्नुपर्दछ । तृष्णालाई सर्वथा छोड्नुपर्दछ । यस संसारको धन सबै परमेश्वरको हो । व्यक्तिगत कसैको पनि होइन ।

३. *यं न पश्यति पश्यन्तं चक्षुर्यस्य न रिष्यति ।*
*तं भूतनिलयं देवं सुपर्णमुपधावत ॥*

भगवान् सर्वसाक्षी हुन् अगम्य छन् सधैँभरि ।
अन्तर्यामी उनैलाई सम्झौँ शरणमा परी ॥

शब्दार्थ :– पश्यन्तम् = सबैलाई हेरिरहने, यम् = जुन परमेश्वरलाई, न पश्यति = देख्न सक्तैन, यस्य = जसको, चक्षुः = दृष्टिशक्ति, न रिष्यति = नष्ट हुँदैन, तम् = त्यस प्रकारका, भूतनिलयम् = सबैका हृदयमा वास गर्ने, सम्पूर्णम् = परमात्मस्वरूप, देवम् = स्वयं प्रकाश साक्षी आत्माको शरणमा, उपधावत = जाऊ ।

श्रीधर :– ननु यदि सर्वं व्याप्नोति तर्हि चक्षुरादिभिः किं

न प्रतीयते, तत्राह यं पश्यन्तं जनश्चक्षुर्वा न पश्यति, चक्षुराद्यविषयत्वात् । न हि प्रमातारं प्रमाणं विषयीकरोतीति भावः । तथा च श्रुतिः *'प्राणस्य प्राणमुत चक्षुषश्चक्षुरुत श्रोत्रस्य श्रोत्रम् मनसो ये मनो विदुः । ते निचिक्युर्वह्म पुराणमग्र्यम्' (वृ.उ.४।४।१८)* इत्यादि । ननु तर्हि घटनाशे देवदत्तस्य तद्विषयं चाक्षुषं ज्ञानमिवेश्वरस्यापि स्वरूपभूतं तद्विषयं ज्ञानं नश्येत्तत्राह यस्य तु पश्यतश्चक्षुर्ज्ञानं न रिष्यति न नश्यति । तत्तदाकारेणो–त्पन्नाया वृत्तेरेव नाशो न स्वतः सिद्ध ज्ञानस्य । नहि सवितृप्रकाशः प्रकाश्यनाशे नश्यतीति भावः । भूतानि निलयो यस्य तं सर्वान्तर्यामिणं, तथापि सुर्पर्णं शोभनपतन–मसङ्गमुपधावत भजध्वम् ।

नेपालीम अर्थ :– भगवान् सबैका साक्षी हुनुहुन्छ । उहाँलाई बुद्धिका वृत्तिहरू र चक्षु आदि इन्द्रियहरू पनि देख्न सक्तैनन् । श्रुतिले भनेको छ – *'यन्मनसा न मनुते येनाहुर्मनो मतम् । तदेव ब्रह्म त्वं विद्धि नेदं यदिदमुपासते ॥ यच्चक्षुषा न पश्यति येन चक्षूंषि पश्यति । तदेव ब्रह्म त्वं विद्धि नेदं यदिदमुपासते ॥ यच्छ्रोत्रेण न शृणोति येन श्रोत्रमिदं श्रुतम् । तदेव ब्रह्म त्वं विद्धि नेदं यदिदमुपासते ॥' (केनोपनिषद् १।५, ६, ७)*

किन्तु परमात्माको ज्ञानशक्ति अखण्ड छ । समस्त प्राणीहरूका हृदयमा विराजमान उनै स्वयंप्रकाश असङ्ग परमात्माका शरणमा समर्पित होऊ ।

४. *न यस्याद्यन्तौ मध्यञ्च स्वपरो नान्तरं बहिः ।*
*विश्वस्यामूनि यद् यस्याद् विश्वञ्च तदृतं महत् ॥*

आदि अन्त्य कुनै छैन न आफ्नू न कुनै पर ।
हुन् सत्चित् परमानन्द साक्षाद् ब्रह्म परात्पर ॥

शब्दार्थ :– यस्य = जसको, आद्यन्तौ = आदि र अन्त्य, मध्यञ्च = माझ पनि, न = छैन, स्वः = आफ्नो, यस्मात् = जसबाट, विश्वस्य = संसारको, अमूनि = सृष्टि, स्थिति र संहार हुन्छ, विश्वञ्च = संसार पनि, यत् = जसको स्वरूप हो, तत् = त्यो, महत् = सर्वव्यापक तत्त्व, ऋतम् = एकमात्र सत्य हो ।

श्रीधर :– तस्य स्वरूपस्य नित्यत्वमेवोपपादयन्नाह न यस्येति । अमून्याद्यन्तादीनि विश्वस्य यस्माद्भवन्ति विश्वञ्च यत् यद्रूपम् । अत एवाव्यभिचारित्वात्तदृतं सत्यम् । महत् परिपूर्णं ब्रह्म ।

नेपालीमा अर्थ :– जुन परमात्माको न आदि छ न अन्त छ । यस अवस्थामा मध्य कसरी हुनसक्तछ ? जसको न कुनै आफ्नू छ न पराई छ, न बाहिर छ, न भित्र छ । उहाँ नै सबै कुरा हुनुहुन्छ । उहाँकै सत्ताले नै विश्व सत्तायुक्त छ । त्यही अनन्त वास्तविक सत्त्य नै परब्रह्म हो । श्रुतिले भनेको पनि छ । जस्तै – *'दिव्यो ह्यमूर्तः पुरुषः स बाह्याभ्यन्तरो ह्यजः । अप्राणो ह्यमनाः शुभ्रो ह्यक्षरात्परतः परः ॥' (मुण्डकोपनिषद् २।१।२)*

५. *स विश्वकायः पुरुहूत ईशः सत्यः स्वयंज्योतिरजः पुराणः ।*
*धत्तेऽस्य जन्माद्यजयाऽऽत्मशक्त्या तां विद्ययोदस्य निरीह आस्ते ॥*

ती विश्वकर्ता र अनन्त नाम, हुन् सर्वशक्त्याश्रय सर्वकाम ।
लिएर मायामय शक्ति खास, यी सृष्टि गर्छन् तर छन् उदास ॥

**शब्दार्थ** :– विश्वकायः = विश्वरूप, पुरुहूतः = अनेक नामहरूबाट सम्बोधन गरिने, सत्यः = सत्य, स्वयंज्योतिः = स्वयंप्रकाश, अजः = अजन्मा, पुराणः = पुराणपुरुष, सः = उनै, ईशः = परमात्मा, अजया = माया भनिने, आत्मशक्त्या = आफ्नै शक्तिद्वारा, अस्य = यस संसारको, जन्मादि = सृष्टि, स्थिति र प्रलय समेत, धत्ते = धारण गर्नुहुन्छ, तम् = त्यही मायालाई, विद्यया = स्वरूपज्ञानद्वारा, उदस्य = नाश गरेर, निरीहः = निष्क्रिय भएर, आस्ते = रहनुहुन्छ ।

**श्रीधर** :– ननु विश्वं चेत् तद्रूपं तर्हि तस्य कुतो जन्माद्यभावः स्वप्रकशत्वं वा, कथं वा जगज्जन्मादिकर्तृत्वेन विकारिणः सत्यत्वं पूर्णत्वञ्च तत्राह स ईशोऽजः सत्यश्च स्वप्रकाशश्च पुराणश्च निर्विकारः । विश्वं कायो यस्य । पुरुणि हूतानि नामानि यस्य तथाविधोऽपि यतोऽस्य विश्वस्य जन्मादि स्वशक्त्या मायया धत्ते । ताञ्च नित्यसिद्धया विद्ययोदस्य हित्वा निष्क्रिय एवास्ते ।

**नेपालीमा अर्थ** :– यिनै परमात्मा विश्वरूप हुन् । उहाँका अनन्त नामहरू छन् । उहाँ सर्वशक्तिमान् सत्य, स्वयंप्रकाश, अजन्मा र पुराणपुरुष हुनुहुन्छ । उहाँ आफ्ना मायाशक्तिद्वारा नै विश्वसृष्टिका जन्म आदिलाई स्वीकार गरेर आफ्ना विद्याशक्तिद्वारा त्यसलाई त्याग गरेर निष्क्रिय र सत्स्वरूपमा मात्र अवस्थित हुनुहुन्छ । श्रुति भन्दछ – *'आत्मैवेदं सर्वम्' (छा.उ.७।२५।२) 'रूपं रूपं प्रतिरूपो बभूव, इन्द्रो मायाभिः पुरुरूप ईयते ।' (बृ.उ.२।५।१९) 'निष्कलं निष्क्रियंशान्तं निरवद्यं*

*निरञ्जनम् । अमृतस्य परं सेतुं दग्धेन्धनमिवानलम् ॥' (श्वेताश्वतरोपनिषद् ६।१९)*

६. *अथाग्रे ऋषयः कर्माणीहन्तेऽकर्महेतवे ।*
*ईहमानो हि पुरुषः प्रायोऽनीहां प्रपद्यते ॥*

**शुरुमा कर्मयोगीले ब्रह्मप्राप्ति निमित्तमा ।**
**नैष्कर्म्य गर्दछन् कर्म कर्म छुट्तछ अन्त्यमा ॥**

**शब्दार्थ :–** अथ = त्यस उसले, ऋषयः = ऋषिहरूले, अकर्महेतवे = मोक्षका निमित्त, अग्रे = पहिले, कर्माणि = कर्महरू, ईहन्ते = गर्दछन्, प्रायः = धेरैजसो, ईहमानः = कर्म गर्नेहरू, पुरुषः, हि = पुरुषले नै, अनीहाम् = नैष्कर्म्यभाव, प्रपद्ये = प्राप्त गर्दछ ।

**श्रीधर :–** यस्मादेवमीश्वरः कर्म कृत्वा संत्यज्य नैष्कर्म्येणास्ते, अथास्माद्धेतोः ऋषयोऽप्यग्रे आदौ कर्माणि कुर्वन्ति । किमर्थम् । अकर्महेतवे मोक्षार्थम् । पाठान्तरे कर्मनाशाय । हि यस्मात् ।

**नेपालीमा अर्थ :–** यसैकारण ऋषिमुनिहरू नैष्कर्म्यस्थिति अर्थात् ब्रह्मात्मभाव प्राप्त गर्नका लागि पहिले कर्मयोगको अनुष्ठान गर्दछन् । प्रायः कर्म गर्नेहरू नै अन्त्यमा निष्क्रिय भएर अर्थात् निष्कर्मा भएर कर्मबाट विरत हुन्छन् । श्रुतिले भनेको पनि छ *'पूर्वे विद्वांसः प्रजां न कामयन्ते किं प्रजया करिष्यामो येषां नोऽयमात्मायं लोक इति ते ह स्म पुत्रैषणायाश्च वित्तैषणायाश्च लोकैषणायाश्च व्युत्थायाथ भिक्षाचर्यं चरन्ति ।' (बृ.उ. ४।४।२२)*

*न कर्मणा न प्रजया धनेन त्यागेनैकेन अमृतत्वमानशुः ।'*
*(कैवल्य उ.१।२)*

७. *ईहते भगवानीशो न हि तत्र विषज्जते ।*
*आत्मलाभेन पूणार्थो नावसीदन्ति येऽनुतम् ॥*

हुन ता गर्दछन् कर्म भगवान् पनि बाहिर ।
पूर्णकाम भएकाले छन् अनासक्त ईश्वर ॥

**शब्दार्थ :–** हि = निश्चय पनि, आत्मलाभेन = आत्मज्ञानद्वारा, पूर्णार्थः = मनोवाञ्छा पूर्ण भएका, ईशः = सर्वसमर्थः, भगवान् = ईश्वर, ईहते = कर्म गर्दछन् । तत्र = ईश्वर त्यस कर्ममा, न विसज्जते = टाँसिदैनन्, ये = जुन मान्छेहरू, अनु = पछाडि, तम् = त्यसै परमात्माको सिको गरेर, न अवसीदन्ति = काम्य कर्ममा आसक्त हुँदैनन् ।

**श्रीधर :–** नन्वीहमानः कर्मभिरवगुण्ठितः कोशकार इव बध्येतैव तत्राह ईहत इति । अतस्तमनुवर्तमाना ये ते नावसीदन्ति न विषज्जन्ते ।

**नेपालीमा अर्थ :–** यद्यपि सर्वशक्तिमान् भगवान् पनि कर्म गर्नुहुन्छ । परन्तु उहाँ आत्मलाभद्वारा पूर्णकाम भएका कारण ती कर्महरूमा आसक्त हुनुहुन्न । अतः भगवान्को नै अनुसरण गरेर अनासक्त रहेर कर्म गर्नेहरू पनि कर्मबन्धनबाट मुक्त हुन्छन् । श्रुतिले भनेको पनि छ । जस्तै – *'यदा सर्वे प्रमुच्यन्ते कामा येऽस्य हृदि श्रिताः । अथ मर्त्योऽमृतो भवत्यत्र ब्रह्म समश्नुते ॥' (कठोपनिषद् २।३।१४)*

८. *तमीहमानं निरहङ्कृतं बुधं निराशिषं पूर्णमनन्यचोदितम् ।*
*नृञ्छिक्षयन्तं निजवर्त्मसंस्थितं प्रभुं प्रपद्येऽखिलधर्मभावनम् ॥*

हुन् ब्रह्म ज्ञानामृत पूर्णकाम, हुन् कामनाशून्य र आप्तकाम ।
गर्छन् सबैको हित चित् भएर, परौँ उनैका पदमा गएर ॥

शब्दार्थ :– नृन् = मनुष्यहरूलाई, शिक्षयन्तम् = शिक्षा दिने, निजवर्त्मसंस्थितम् = आफ्नै मर्यादामा रहेर, ईहमानम् = कर्म गर्ने, निरहङ्कृतम् = अहङ्कारशून्य, बुधम् = असक्त, निराशिषम् = कामनारहित भएर, पूर्णम् = सर्वव्यापक, अनन्यचोदितम् = अरू कसैबाट पनि सञ्चालित नहुने, अखिलधर्मभावनम् = सबै धर्महरूको प्रवर्तन गर्ने, तं प्रभुम् = ती परमात्माका, प्रपद्ये = शरणमा पर्दछु ।

श्रीधर :– तदेवं लोकानुग्रहाय विश्वसृष्ट्यादि यः करोति श्रीरामकृष्णादि अवतारैश्च वेदोक्तमप्याााचरति तं शरणं व्रजामि इति आह तमिति । निजं वर्त्म नरावतारानुरूपो मार्गस्तत्र सम्यक् स्थितम् । अत ईहमानं कर्माचरन्तम् । तथापि जीववैलक्षण्यमाह निरहङ्कृतं निराशिषं अनन्यचोदितं इति च । निरहङ्कार हेतुः, बुधम् । निराशीष्ट्वे हेतुः, पूर्णम् । अनन्यनियुक्तत्वे हेतुः, प्रभुम् । तथापि कर्मानुष्ठाने हेतुः, नृन्स्वाचारेण शिक्षयन्तम् । तत्किमर्थं तत्राह अखिलान्धर्मान्भावयति प्रवर्तयति इति तथा तम् ।

नेपालीमा अर्थ :– भगवान् ज्ञानस्वरूप हुनुहुन्छ । यसैकारण उहाँमा अहङ्कारको लेशसम्म पनि छैन । उहाँ सर्वतः परिपूर्ण हुनुहुन्छ । यसैकारण उहाँमा कुनै वस्तुको कामना छैन । उहाँ

**कसैको प्रेरणा विना स्वच्छन्दरूपबाट नै कर्म गर्नु हुन्छ । उहाँ आफैँले बनाएको मर्यादामा रहेर आफ्ना कर्महरूद्वारा मान्छेलाई शिक्षा दिनुहुन्छ । उहाँ नै सम्पूर्ण धर्महरूका प्रवर्तक र जीवनदाता हुनुहुन्छ । म उनै भगवान्का शरणमा जान्छु । श्रुतिले भनेको पनि छ । जस्तै –** *'तमेव धीरो विज्ञाय प्रज्ञां कुर्वीत ब्राह्मणः । नानुध्यायाद् बहूञ्छब्दान् वाचो विग्लापनं हि तदिति ॥' (बृ.उ.४।४।२१)*

**ॐ ब्रह्मार्पणमस्तु ।**



*(द्रष्टव्य :– यो लेख श्रीमद्भागवतको अष्टमस्कन्धको पहिलो अध्यायको ९ औँ श्लोकदेखि १६ औँ श्लोकसम्म स्वायम्भु मनुको स्तुतिमा आधारित छ ।)*



## यस कृतिमा परेका मन्त्रहरू





*भगवान् श्रीमहादेवले गरेको भगवान् श्रीविष्णुको*

# ४. स्तुति

हाम्रा शास्त्रहरूमा भगवान् श्रीशिव र भगवान् श्रीविष्णुमा भेद नभएको कुराको विशद वर्णन पाइन्छ । जसले भेद गर्दछ, त्यो महापातकी हो भनिएको छ । दुवै एकै हुन् र दुवै परमात्मा हुन् । दुवैको स्वरूप ब्रह्मस्वरूप हो । दुवै निष्कल र निर्गुण हुन् । यिनका कुनै भेद छैन । केवल व्यावहारिक तथा सांसारिकरूपमा दुईरूप जस्तो उनीहरू देखिन्छन् ।

दुवै भगवान्का बीचमा अत्यन्त सद्भाव देखिन्छ । एकले अर्कालाई आफ्नू आराध्य उनीहरू मान्दछन् । एकले अर्कासँग उपदेश लिने गर्दछन् । परस्पर एकले अर्काको ब्रह्मभावले स्तुति र आराधना अत्यन्त भक्तिभावले गरेको शास्त्रहरूमा पाइन्छ । त्यो कुरा आस्थावान् विद्वान्हरूबाट विवेच्य विषय हो । यस छोटो लेखमा त्यो मबाट सम्भव नभएकाले केवल सानो प्रसङ्गको मात्र यहाँ संस्मरण गरिन्छ । त्यो विषय हो भगवान् श्रीशिवले गर्नुभएको भगवान् श्रीविष्णुको ब्रह्मपरक स्तुति । जुन श्रीमद्भागवतमहापुराणको अष्टमस्कन्धको बाह्रौँ अध्यायको चारौँ श्लोकदेखि एघारौँ श्लोकसम्म आठ श्लोकहरूमा आएको छ । भगवान् श्रीविष्णुले समुद्रमन्थनका समयमा निःसृत अमृतको वितरण गर्ने सन्दर्भमा लिनुभएको

जगत्मोहनी मोहिनीको अवतारको दर्शन गर्नका लागि भगवान् श्रीशिवले त्यो अर्थवादयुक्त स्तुति गर्नुभएको हो । उक्त स्तुति निम्न अनुसार छ ।

१. *देवदेव जगद्व्यापिञ्जगदीश जगन्मयः ।*
*सर्वेषामपि भावानां त्वमात्मा हेतुरीश्वरः ॥*

देव दव जगन्नाथ ! जगदीश्वर ! ईश्वर !
सर्वकारण सर्वात्मा हेनाथ ! परमेश्वर !

शब्दार्थ :– देवदेव = हे देवताका पनि देवता प्रभो !, जगद्व्यापिन् = हे विश्वव्यापी भगवन् !, जगन्मय = हे विश्वमूर्ति !, जगदीश = हे संसारका मालिक !, सर्वेषाम् = सबै, भावानाम् = पदार्थहरूको, हेतुः = उपादानकारण, ईश्वरः = नियन्ता, आत्मा अपि = आत्मा पनि, त्वम् = तपाईं नै हुनुहुन्छ ।

श्रीधर :– *त्वयि किञ्चिन्न चाश्चर्यं वयं त्वाश्चर्यमानसा । इति वक्ष्यन्महादेवस्तुष्टाव हरिमष्टभिः ॥* त्वयि महामायाविनि परमेश्वरे नहि किञ्चिदघटितमिव, वयं तु परमकौतूहलेन द्रष्टुमागता इति बहुधा सम्बोधयन्तस्तौति । हे देवदेव कुतोऽहं देव इति, अत आह, हे जगद्व्यापिन्, तत्कुत, हे जगन्नाथ, तर्हि किं प्रधानम्, न, हे जगदीश, तच्च कुतः, तत्र आह, सर्वेषामपि त्वं हेतुः, अत ईश्वरः, आत्मत्वाच्च न जडं प्रधानं त्वम्, इति, अर्थः ।

नेपालीमा अर्थ :– हे देवताका पनि आराध्यदेव ! हजूर विश्वव्यापी, जगदीश्वर र जगत्स्वरूप हुनुहुन्छ । समस्त चराचर

पदार्थहरूका मूलकारण, ईश्वर र आत्मा पनि तपाई नै हुनुहुन्छ । *'यो विश्वकर्ता स हि सर्वेशः'* भनेर शास्त्रहरूले भनेका छन् ।

२. *आद्यन्तावस्य यन्मध्यमिदमन्यदहं बहिः ।*
*यतोऽव्ययस्य नैतानि तत्सत्यं ब्रह्मविद् भवान् ॥*

आद्यन्तमध्य हौ नाथ ! यी भन्दा माथि छौ तर ।
भेदातीत तिमी ब्रह्म सद्रूप हौ परात्पर ॥

शब्दार्थ :– यतः = जसबाट, अस्य = यस संसारको, आद्यन्तौ = आदि, अन्त्य र मध्य पनि हुनुहुन्छ, अव्ययस्य = अविनाशीको, एतानि = यी सृष्टि, स्थिति र प्रलय, न हुँदैन । यत् = जुन, इदम् = यो प्रपञ्च, अहम् = अहङ्कार, बहिः = बाहिरी पदार्थ, अन्यत् = भोक्ता पनि, भवान् = तपाई, तत् = त्यही, सत्यम् = सत्स्वरूप, चित् = चैतन्यस्वरूप, ब्रह्म = ब्रह्म हुनुहुन्छ ।

श्रीधर :– ननु जगन्मयत्व उक्तया जगत उत्पत्त्यादिना असत्यत्वेन जाड्येन च ममापि किं तथा त्वं ब्रूषे, नहि नहि, इति आह, आद्यन्तौ मध्यञ्चास्य जगतो यतो ब्रह्मणो भवन्ति, यस्य चाव्ययस्यैतान्याद्यन्तमध्यानि न सन्ति, यच्च ब्रह्म, इदङ्कारास्पदं दृश्यम्, अहङ्कारास्पदं द्रष्टृ च, बहिर्भोग्य-मन्यद्भोक्तृ च, तत्सत्यञ्च चिद्रूपञ्च ब्रह्मैव भवान् । अतो न तव विकारादिशङ्का, इति अर्थः ।

नेपालीमा अर्थ :– यस जगत्को आदि, अन्त र मध्य हजूरबाटै हुन्छन् । हजूरका अविनाशी स्वरूपमा द्रष्टा, दृश्य,

भोक्ता र भोग्यको भेदभाव छैन । वास्तवमा हजूर सत्य र चिन्मात्र ब्रह्म नै हुनुहुन्छ । श्रुतिले भनेको छ – 'यतो वा इमानि भूतानि जायन्ते, येन जातानि जीवन्ति, यत्प्रयन्त्यभिसंविशन्ति, तदविजिज्ञासस्व, तद्ब्रह्मेति । (तै.उ.३।१)

३. *तवैव चरणाम्भोजं श्रेयस्कामा निराशिषः ।*
*विसृज्योभयतः सङ्गं मुनयः समुपासते ॥*

श्रेयस्कामी भई विद्वान् फलाशा मुक्त भैकन ।
गर्छन् हजूरकै भक्ति सेवा मनन चिन्तन ॥

शब्दार्थ :– श्रेयस्कामाः = कल्याण चाहने, निराशिषः = कामनारहित, मुनयः = ज्ञानीहरूले, उभयतः = दुवैबाट, सङ्गम् = आसक्तिलाई, विसृज्य = छोडेर, तव = तपाईंको, चरणाम्भोजम् = चरणकमलको, एव = नै, समुपासते = उपासना गर्दछन् ।

श्रीधर :– तवैवंभूतत्वे मुमुक्षूणां, आचारं प्रमाणम्, इति आह, तवैव इति । उभयत इहामुत्र च सङ्गं त्यक्त्वा ।

नेपालीमा अर्थ :– कल्याणको इच्छा गर्ने विद्वान्हरू यस लोक र अर्को लोक समेतको आसक्ति र सबै एषणाहरू परित्याग गरेर हजूरका पदपङ्कजको आराधना गर्दछन् । श्रुतिले श्रेय र प्रेयको कुरा यसरी गरेको छ। जस्तैः– *“श्रेयश्च प्रेयश्च मनुष्यमेतस्तौ सम्परीत्य विविनक्ति धीरः । श्रेयो हि धीरोऽभि प्रेयसो वृणीते प्रेयोमन्दो योगक्षेमाद्वृणीते ॥” (कठोपनिषद् २।२)*

४. *त्वं ब्रह्म पूर्णममृतं विगुणं विशोक–*
*मानन्दमात्रमविकारमनन्यदन्यत् ।*
*विश्वस्य हेतुरुदयस्थितिसंयमाना–*
*मात्मेश्वरश्च तदपेक्षतयानपेक्षः ॥*

**हौ ब्रह्म निष्कल परात्पर पूर्णरूप**
**हौ एक कारण चराचरका अरूप ।**
**साक्षी तिमी सकलका फलका प्रकाश**
**गर्दौन नाथ कहिल्यै अरूबाट आश ॥**

**शब्दार्थ :– त्वम्** = तपाईं, **अमृतम्** = अमृतस्वरूप, **विगुणम्** = गुणरहित, **विशोकम्** = शोकशून्य, **आनन्दमात्रम्** = केवल आनन्दस्वरूप, **अविकारम्** = निर्विकार, **पूर्ण ब्रह्म** = पूर्ण ब्रह्म हौ, **अनन्यत्** = तपाईं बाहेक अरू केही छैन, **अन्यत्** = तपाईं सबैदेखि फरक हुनुहुन्छ । **विश्वस्य** = संसारको, **उदयस्थितिसंयमानाम्** = उत्पत्ति, स्थिति र लयको समेत, **हेतुः** = कारण हुनुहुन्छ, **अनपेक्षः** = निरपेक्ष भएर, **तदपेक्षतया** = जीवहरूको अपेक्षाले, **आत्मेश्वरः च** = जीवहरूको कर्मफलदाता ईश्वर हुनुहुन्छ ।

**श्रीधर :–** ननु ब्रह्मैव चेदहं तर्ह्यसङ्गो उदासीनस्य मम चरणाम्भोजोपासनया किं तेषां तत्र आह, त्वमिति ब्रह्मत्वेऽपि त्वं नात्यन्तमुदासीनः किन्तु विश्वस्य प्रपञ्चस्योदयादीनां हेतुः, तदुपाधीनामात्मनां जीवानामीश्वरश्च तत्तत्फलदाता, तर्हि किं राजादिवत्कयाप्यपेक्षया सेवकेभ्यः फलं ददामि, नहि नहि,

अनपेक्ष एव त्वम्। तर्हि किमीश्वरत्वेन तत्राह, तैरात्म-भिस्तत्फलदानार्थमपेक्ष्यत इति तदपेक्षस्तस्य भावस्तदपेक्षता तया। अनपेक्षत्वमेव दर्शयितुं तदीयं ब्रह्मत्वं विशिनष्टि, पूर्णममृतञ्च सुखरूपम्। विषयसुखवैलक्षण्यार्थमाह, अविकारं नित्यमानन्दमात्रञ्च। विशोकं, तत्कुतः, विगुणम्, किञ्च अनन्यत्, न विद्यते अन्यद् यस्मात्, ब्रह्मव्यतिरिक्ताभावाद् अपि निरपेक्षस्त्वमित्यर्थः। तर्हि सर्वात्मकत्वे तत्तद्विकारप्रसङ्गो दुर्वारस्तत्राह, अन्यत्सर्वतो व्यतिरिक्तञ्च, कारणत्वात्। नहि एवंभूत सुखात्मकब्रह्मस्वरूपस्य तवान्यापेक्षास्ति। अतः केवलं भक्तानुग्रहार्थमेव तवैश्वर्यं न स्वार्थमित्यर्थः।

नेपालीमा अर्थ :- हजूर अमृतस्वरूप हुनुहुन्छ। समस्त प्रकृतिका गुणहरूले रहित हुनुहुन्छ। शोकबाट पनि टाढा हुनुहुन्छ। हजूर स्वयं परिपूर्ण ब्रह्म हुनुहुन्छ। केवल आनन्दस्वरूप हुनुहुन्छ। निर्विकार हुनुहुन्छ। हजूरदेखि भिन्न केही छैन, तर हजूर सबैदेखि भिन्न हुनुहुन्छ। हजूर विश्वको उत्पत्ति, स्थिति र प्रलयका परमकारण हुनुहुन्छ। हजूर सम्पूर्ण जीवहरूका शुभाशुभ कर्मका फलका दाता हुनुहुन्छ। किन्तु यो कुरा पनि जीवहरूका अपेक्षाबाट भनिन्छ। वस्तुतः हजूर सबै कुराका अपेक्षाबाट रहित हुनुहुन्छ। अर्थात् अनपेक्ष हुनुहुन्छ। श्रुतिले भनेको पनि छ। जस्तै –

*निष्कलं निष्क्रियं शान्तं निरवद्यं निरञ्जनम्।*
*अमृतस्य परंसेतुं दग्धेन्धनमिवानलम्॥ (श्वे.उ.६।१९)*

५. *एकस्त्वमेव सदसद् द्वयमद्वयञ्च*
*स्वर्णं कृताकृतमिवेह न वस्तुभेदः ।*
*अज्ञानतस्त्वयी जनैर्विहितो विकल्पो*
*यस्माद् गुणैर्व्यतिकरो निरुपाधिकस्य ॥*

हौ कार्यकारण दुवै द्वय वा अद्वैत
आभूषणादि सुनमा कसरी छ ? द्वैत ।
आफैँ तिमी सकलमा परिपूर्ण एक
लिन्छौ तिमी प्रकृतिका गुण ती अनेक ॥

शब्दार्थ :– एकः = एउटा मात्र, त्वम् = तपाईं, एव = नै, कृताकृतम् = गहना बनाएको र नबनाएको, स्वर्णम् = सुन, इव = झैँ, सदसत् = कार्यकारणरूप, द्वयम् = द्वैत, अद्वयञ्च = अद्वैत समेत हुनुहुन्छ । इह = यस प्रकारको द्वैत र अद्वैतरूप तपाईंमा, वस्तुभेदः = वास्तविक भेद, न = छैन । त्वयि = तपाईंमा, जनैः = मानिसहरूद्वारा, अज्ञानतः = अज्ञानका कारण, विकल्पः = भेदव्यवहार, विहितः = गरिन्छ ।

श्रीधर :– अन्यत्वमनन्यत्वञ्चैकस्य कुत इति आशङ्क्य दृष्टान्तेनोपपादयति, सदसत्कारणरूपं द्वयमद्वयञ्च परमकारणं त्वमेवैकः । कृतं कुण्डलादिरूपं द्वयमकृतञ्च केवलमद्वयं स्वर्णं यथैकमेव तद्वदेवेह त्वयि वस्तुतो भेदो नास्ति । कथं तर्हि भेदप्रतीतिस्तत्राह, अज्ञानत इति, कुतः, यस्मान्निरुपाधिकस्यैव तवायं गुणैर्व्यतिकरो भेदो न स्वतः ।

नेपालीमा अर्थ :– हे भगवन् ! कार्य र कारण, द्वैत र

अद्वैत जे जति छन् ती सबै एक मात्र हजूर नै हौ । जसरी आभूषणाका रूपमा रहेको सुन र डल्लोका रूपमा रहेको काँचो सुनमा कुनै अन्तर हुँदैन । दुवै एकै वस्तु हुन् । अज्ञानका कारण हजूरको वास्तविक स्वरूप नजानेर हजूरमा नाना प्रकारका भेद भाव र विकल्पहरूको कल्पना गरिन्छ । हजूरमा भेद नभएर पनि प्रकृतिका सत्त्व, रजस् र तमो गुणलाई लिएको हुँदा हजूरमा भेदको प्रतिति हुन्छ । श्रुतिले भनेको छ । जस्तै – *'एको देवः सर्वभूतेषु गूढः सर्वव्यापी सर्वभूताधिवासः । कर्माध्याक्ष सर्वभूताधिवासः साक्षी चेता केवलो निर्गुणश्च ॥' (श्वे.उ.६।११)*

६. *त्वां ब्रह्म केचिदवयन्त्युत धर्ममेके*
*एके परं सदसतोः पुरुषं परेशम् ।*
*अन्येऽवयन्ति नवशक्तियुतं परं त्वं*
*केचिन्महापुरुषमव्ययमात्मतन्त्रम् ॥*

हौ ब्रह्म, धर्म अनि हे प्रभु खास के हौ ?
यद्वा तिमी प्रकृतिका पुरुषादि के हौ ?
नौ शक्ति युक्त भगवान् कि त ? ईश्वरै हौ ?
जे भन्दछन् सब भनुन् तर ईश नै हौ ।

शब्दार्थ :– त्वाम् = तपाईंलाई, केचित् = कोही, ब्रह्म = ब्रह्मतत्त्व, अवयन्ति = भन्दछन्, उत = अनि, एके = एकथरी, धर्मम् = धर्मरूप मान्दछन्, एके = कोही, सदसतोः = प्रकृति र पुरुषभन्दा, परम् = पर रहेको, पुरुषम् = परम पुरुष, परेशम् =

परमेश्वर मान्दछन् । अन्ये = अरू केही, त्वाम् = तपाईंलाई नवशक्तियुक्तम् = नौ शक्तिले युक्त, परम् = परमात्मा, अवयन्ति = मान्दछन् भने, केचित् = कोही, अव्ययम् = अविनाशी, महापुरुषम् = परमपुरुष भन्दछन् ।

श्रीधर :– अत एव त्वां बहुधा वर्णयन्ति तत्त्वतस्तु केऽपि न जानन्तीत्याह द्वाभ्याम् । त्वां ब्रह्म वेदान्तिनोऽवयन्ति मन्यन्ते । त्वामेव धर्मं मीमांसका मन्यन्ते । प्रकृतिपुरुषयोः परं पुमांसं साङ्ख्यः । विमलोत्कर्षणी ज्ञान क्रिया योगा प्रह्वी सत्या ईशाना अनुग्रहा चेत्येवं नवशक्तियुक्तं परं पाञ्चरात्राः । महापुरुषं पातञ्जलाः ।

नेपालीमा अर्थ :– हे भगवन् ! कसैकसैले हजूरलाई ब्रह्म भन्दछन् । अर्काथरी धर्म भन्दछन् । कोही कोही प्रकृति र पुरुषभन्दा माथि परमेश्वर मान्दछन् । यसैगरेर केहीले नवशक्तिहरूले युक्त परम पुरुष मान्दछन् । अरू कोही क्लेशकर्म विपाकादिबाट मुक्त अविनाशी ईश्वर मान्दछन् । श्रुतिले भनेको छ *'एकं सद् विप्राबहुधा वदन्ति' 'तमेकं सन्तं बहुधा वदन्ति' नीहारेण प्रावृता जल्प्याः ।'* योगसूत्रले भनेको छ – *'क्लेशकर्मविपाकाश–यैरपरामृष्टः पुरुषविशेष ईश्वरः ।'*

७. *नाहं परायुर्ऋषयो न मरीचिमुख्याः*
*जानन्ति यद्विरचितं खलु सत्त्वसर्गाः ।*
*यन्मायया मुषितचेतस ईश दैत्य–*
*मर्त्यादयः किमुत शश्वदभद्रवृत्ताः ॥*

हामी अजादि जति छौँ सब अज्ञ नै छौँ

तिम्रो विराट् विषयमा अनभिज्ञ नै छौँ ।

मायेश गुह्य अति छौ बुझिँदैन अन्त

के बुझ्छ मानिस कठै ! प्रभु छौ अनन्त ॥

शब्दार्थ :– खलु = निश्चय पनि, यद्विरचितम् = भगवान्को रचनालाई, सत्त्वसर्गाः = सत्त्वगुणी भएर पनि, परायुः = ब्रह्माजीले, मरीचिमुख्याः = मरीचिआदि, ऋषयः = ऋषिहरूले पनि, न जानन्ति = जान्दैनन्, अहं न = मै पनि जान्दिन, ईश = हे परमात्मा, यन्मायया = जुन मायाद्वारा, मुषितचेतसः = बुद्धिभ्रष्ट भएका, शश्वत् = सधैँभरि, अभद्रवृत्ताः = खराब गुण भएका, दैत्यमर्त्यादयः = दैत्य र मानिस आदिले, किमुत = कसरी जानून् ?

श्रीधर :– परायुर्ब्रह्मा, सत्त्वसर्गाः सत्त्वगुणेन स्रष्टा अपियेन त्वया विरचितं विश्वमपि खलु तत्त्वतः, न जानन्ति, किं पुनस्त्वाम् । हे ईश, अभद्र राजसंतामसं च वृत्तम्, उत्पत्तिः, येषां ते न जानन्ति इति किमुवक्तव्यम् ।

नेपालीमा अर्थ :– हे प्रभो ! म, ब्रह्मा र मरीचि आदि ऋषि समेत जो सत्वगुणी छौँ, हामीहरू हजूरले रचना गरेको बाहिरी संसारको रहस्यलाई नै बुझ्न सक्तैनौ भने हजूरलाई जान्ने ता कुरै भएन । अर्कोतिर जसको चित्त मायाले आफ्ना वशमा राखेको छ र जुन सधैँ रजोगुणी र तमोगुणी कर्महरूमा चुर्लुम्म डुबेका छन्, ती असुर र मानिस आदिले कठैबरा ! के जानुन् । श्रुति भन्दछ । जस्तै – *'न तस्य कश्चित्पतिरस्ति लोके न चेशिता*

*नैव च तस्य लिङ्गम् । स कारणं करणाधिपाधिपो न चास्य कश्चिज्जनिता न चाधिपः ॥' (श्वे.उ.६।९)*

८. *स त्वं समीहितमदः स्थितिजन्मनाशं*
*भूतेहितञ्च जगतो भवबन्धमोक्षौ ।*
*वायुर्यथा विशति खञ्च चराचराख्यं*
*सर्वं तदात्मकतयावगमोऽवरुन्त्से ॥*

ज्ञानस्वरूप भगवन् ! सबमा तिमी छौ
सारै अदृश्य अति सूक्ष्म समीर झैँ छौँ ।
साक्षी तिमी सकलका मनभित्र बस्छौ
सृष्टिस्थिति प्रलय, यी सब नित्य गर्छौं ॥

शब्दार्थ :– यथा = जसरी, वायुः = वतास, खम्, आकाश = अनि, चराचराख्यञ्च = चराचर प्राणीहरू भित्र समेत, विशति = व्याप्त छ । सः = यस्ता, अवगमः = शुद्ध ज्ञानस्वरूप, त्वम् = हजूर, तदात्मकतया = सर्वात्मक भएकाले, समीहितम् = आफ्नो सृष्टि, अदः = यस, जगतः = जगत्को, स्थितिजन्मनाशम् = सृष्टि स्थिति र प्रलय, भूतेहितम् = प्राणीहरूको कर्म, भवबन्धमोक्षौ च = संसारको बन्धन र मोक्षलाई समेत, सर्वं = सबैलाई, अवरुन्त्से = ढाक्नु हुन्छ र जान्नु पनि हुन्छ ।

श्रीधर :– किन्तु त्वं तत्सर्वं जानासि, इति, आह – स त्वं सर्वमवरुन्त्से व्याप्नोषि जानासि, किं तत्सर्वं, समीहितं स्वकृतमदः स्थितिजन्मनाशममुष्य जगतो जन्मादि भूतानामी–हितञ्च जगतो भवबन्धमोक्षौ च । व्याप्तौ दृष्टान्तः –

चराचराख्यं देहजातं खञ्च यथा वायुराविशति तथा। कथमवरुन्त्से। तदात्मकतया तस्य सर्वस्यात्मतया इत्यर्थः। आत्मत्वे हेतुः, अवगमो ज्ञानरूप इति।

नेपालीमा अर्थ :– हे प्रभो ! हजूर सर्वात्मक र ज्ञानस्वरूप हुनुहुन्छ। यसकारण वायुका सरह आकाशमा अदृश्य रहेर पनि हजूर सम्पूर्ण चराचर जगत्‌मा सदासर्वदा विद्यमान रहनुहुन्छ। संसारको सृष्टि, स्थिति, प्रलय, प्राणीहरूको कर्म, बन्धन र मोक्ष समेत सबै कुरा हजूर जान्नुहुन्छ। ॐ ब्रह्मार्पणमस्तु।



## यस कृतिमा परेका मन्त्रहरू





*छोराहरूलाई पिताको*

# ५. अन्तिम उपदेश

चक्रवर्ती सम्राट् ऋषभदेवलाई भगवान्‌को अंश भनेर भागवतले भनेको छ । उहाँ स्वायम्भुव मनुका जनाति अर्थात् मनुका जेठा छोरा प्रियव्रत, उनका छोरा आग्नीध्र, उनका छोरा नाभि र उनका छोरा ऋषभदेव हुनुहुन्थ्यो । उहाँको विवाह स्वर्गका इन्द्रकी छोरी जयन्तीसँग भएको थियो । उहाँका भरत आदि गरेका एकसय छोराहरू थिए । उनका जेठा छोरा भरतलाई सम्पूर्ण राजपाट उहाँले दिनुभयो । नौजना छोराहरू नवद्वीपका स्वामी भए । कवि आदि नाम गरेका नौओटा छोराहरू योगेश्वर संन्यासी भए । अरू बाँकी एकासीओटा छोराहरू वेदज्ञ ब्राह्मण भए ।

राजा ऋषभदेवले आफ्नू राजपाट समेत सबै कुरा छोराहरूका जिम्म लगाएर संन्यास लिएर प्रव्रज्यामा प्रस्थान गर्नुअघि आफ्ना सबै सय भाइ छोराहरूलाई आफ्ना अगाडि राखेर दिनुभएको अत्यन्त महत्त्वपूर्ण वेदान्तपरक अन्तिम उपदेश हो । यो उपदेश श्रीमद्भागवतमहापुराणको पञ्चम स्कन्धको पाचौँ अध्यायमा एक श्लोकदेखि सत्ताईस श्लोकसम्म आएको छ ।

ऋषभदेव भन्नुहुन्छ –

१. *नायं देहो देहभाजां नृलोके*
*कष्टान् कामानर्हते विड्भुजां ये ।*
*तपो दिव्यं पुत्रका येन सत्त्वं*
*शुद्ध्येद्यस्माद् ब्रह्मसौख्यं त्वनन्तम् ।।*

हे छोरा हो ! देह नृको अलभ्य,
भोग्नैलाई हैन यो देह लभ्य ।
यो हो भित्री बुद्धि पारेर शुद्ध,
गर्ने प्राप्ति ब्रह्म आनन्द बुद्ध ।।

शब्दार्थ :– अयम् = यो, देहः = नरचोला, देहभाजाम् = प्राणीहरूमा, नृलोके = नरलोकमा, कष्टान् = कष्ट दिने, कामान् = विषयभोग भोग्न, न अर्हते = ठीक छैन । विड्भुजाम् = विष्टाखानेलाई योग्य, ये = जति विषयहरू छन् । तपः = तप गर्न, दिव्यम् = उत्तम, पुत्रकाः = हे छोराहरू हो !, येन = जुन तपस्याबाट, सत्त्वम् = अन्तःकरण, शुद्ध्येत् = शुद्ध हुन्छ । यस्मात् = जुन अन्तःकरणद्वारा, ब्रह्मसौख्यम् = ब्रह्मानन्द, तु = चाहिँ, अनन्तम् = अविनाशी ।

श्रीधर :– पञ्चमे मोक्षधर्मोपदेशैः पुत्रानुशासनम् । विड्भुजामपि ये सन्ति तान्कष्टादुःखदान्कामान्विषयान्नार्हति तद्योग्योऽयं मनुष्यदेहो न भवति । दिव्यमुत्कृष्टम् । येन तपसा । यस्माच्छुद्धात्सत्त्वादनन्तं ब्रह्मसुखं भवति ।

नेपालीमा अर्थ :– हे छोराहरू हो ! यस मृत्युलोकमा यो मनुष्यशरीर दुःखमय विषयभोग प्राप्त गर्नका लागि नै होइन ।

यो भोग ता विष्टा भोजन गर्ने सुँगुर, कुकुरलाई पनि प्राप्त हुन्छ। यस शरीरले ता दिव्य तप नै गर्नुपर्दछ। जसबाट अन्तःकरण शुद्ध हुन्छ। किनभने यसैबाट अनन्त ब्रह्मानन्दको प्राप्ति हुन्छ। श्रुतिले भनेको पनि छ – *'तमेतं वेदानुवचनेन ब्राह्मणा विविदिषन्ति यज्ञेन दानेन तपसानाशकेनैतमेव विदित्वा मुनिर्भवति ।' (बृ.उ.४।४।२२) 'सत्त्वं द्रव्ये गुणे जीवे धैर्येऽन्तःकरणे सति ।' (निरुक्त)*

२. *महत्सेवां द्वारमाहुर्विमुक्तेस्तमोद्वारं योषितां सङ्गिसङ्गम् ।*
*महान्तस्ते समचित्ता प्रशान्ता विमन्यवः सुहृदः साधवो ये ॥*

महत्सेवा मुक्तिको द्वार हुन्छ, स्त्रीसङ्गीको सङ्गले नर्क खुल्छ ।
ठूला मान्छे शान्त सुसौम्य दिन, हुन्छन्, सोझा शुद्ध मात्सर्यहीन ॥

शब्दार्थ :– महत्सेवाम् = सन्तपुरुषको सेवालाई, द्वारम् = ढोका, आहुः = भन्दछन्। विमुक्तेः = मुक्तिका लागि, तमोद्वारम् = अन्धकारयुक्त संसारको दैलो, योषिताम् = नारीहरूको, सङ्गिसङ्गम् = सङ्गत गर्ने मान्छेको सङ्गतलाई, महान्तः = महापुरुष, ते = तिनीहरू, समचित्ताः = शुद्ध चित्त भएका, प्रशान्ताः = परमशान्त, विमन्यवः = रिसरहित, सुहृदः = सबैको हित गर्ने, साधवः = साधुहरू, ये = जुन पुरुषहरू ।

श्रीधर :– मोक्षबन्धयोर्निदानमाह । महत्सेवामिति । तमसः संसारस्य द्वारं योषितां ये सङ्गिनस्तेषां सङ्गम्। महतां लक्षणमाह सार्धेन । महान्त इति । साधवः सदाचाराः ।

नेपालीमा अर्थ :– महापुरुषका सेवाबाट मुक्तिको ढोका

खुल्दछ र स्त्रीलम्पट कामीका सङ्गतले नरकको ढोका खुल्दछ भनेर शास्त्रहरू भन्दछन् । महापुरुषहरू तिनै हुन् जो समानचित्त, परमशान्त, क्रोधहीन, सबैका हितचिन्तक र सदाचार सम्पन्न हुन्छन् । श्रुति भन्दछ – *“तद्य इह रमणीयचरणा अभ्याशो ह यत्ते रमणीयां योनिमापद्येरन्ब्राह्मणयोनिं वा क्षत्रिययोनिं वा वैश्ययोनिं वाथ य इह कपूयचरणा अभ्याशो ह यत्ते कपूयां योनिमापद्येरञ्श्वयोनिं वा सूकरयोनिं वा चण्डाल योनिं वा ।” (छा.उ.५।१०।७)*

३. *ये वा मयीशे कृतसौहृदार्था जनेषु देहम्भरवार्तिकेषु ।*
*गृहेषु जायात्मजरातिमत्सु न प्रीतियुक्ता यावदर्थश्च लोके ॥*

आत्मा भए प्राप्ति अवश्य जान, संसारी हुन् हेय भनेर ठान ।
जो त्यागी हो त्यैसँग राख चाख, प्रेमीहरूमा प्रियभाव राख ॥

शब्दार्थ :– ये = जुन मनुष्यहरू, वा = अथवा, मयि = म, ईशे = परमात्मामा, कृतसौहृदार्थाः = गरिएको निष्काम प्रेमलाई पुरुषार्थ ठान, जनेषु = मान्छेहरूमा, देहम्भरवार्तिकेषु = खानका लागि मात्रै कर्म गर्ने, गृहेषु = घरमा, जायात्मजरातिमत्सु = श्रीमती, छोरा र सम्पत्तिले सम्पन्न, न प्रीतियुक्ताः = प्रेम गर्ने हुँदैनन्, यावदर्थाश्च = केवल जीवनधारणा गर्न प्रवृत्त भएका महापुरुषहरू, लोके = संसारमा ।

श्रीधर :– मयि ईशे कृतं सौहृदमेवार्थः पुरुषार्थो येषाम् । वा शब्देनान्यनिरपेक्षस्यैवास्य लक्षणत्वं दर्शयति । देहं बिभर्तीति देहम्भरा विषयवार्तैव न धर्मविषया येषु तेषु जनेषु जायादियुक्तेषु

च गृहेषु च। रातिर्मित्रं धनं वा। यावदर्थाश्च यावदर्थमेवार्थो येषामिति। देहनिर्वाहाधिक स्पृहाशून्या इत्यर्थः।

नेपालीमा अर्थ :– यदि तिमीहरू परमात्माका साथ प्रेम गर्नु नै आफ्नू पुरुषार्थ मान्दछौ भने खाली विषयमा आसक्त व्यक्तिहरूका सँग सङ्गत नगर। जसको स्त्री, पुत्र र धन आदि सामग्रिहरूले सम्पन्न घरमा अरुचि छ र लौकिक कार्यमा केवल जीवन धान्नका लागि मात्रै प्रवृत्त छ, त्यस्ता व्यक्तिका साथ सङ्गत गर। श्रुतिले भनेको छ – *'एतद्ध स्म वै तत्पूर्वे विद्वाँसः प्रजां न कामयन्ते।'* *(बृ.उ.४।४।२२)*

४. *नूनं प्रमत्तः कुरुते विकर्म यदिन्द्रियप्रीतय आप्रिणोति।*
*न साधु मन्ये यत आत्मनोऽयमसन्नपि क्लेशद आस देहः॥*

प्रमादले इन्द्रिय तृप्त गर्न, आसक्त भै गर्दछ जो कुकर्म।
त्यो हैन राम्रो यसले बिगार्छ, संसारले दुःख दिएर झार्छ॥

शब्दार्थ :– नूनम् = अवश्य, प्रमत्तः = मातेको, कुरुते = गर्दछ, विकर्म = पाप, यत् = जब, इन्द्रियप्रितये = इन्द्रियलाई सन्तुष्ठ गर्न, आपृणोति = विषयभोग गर्दछ। न मन्ये = मान्दिँन, साधु = असल, यतः = जसबाट, आत्मनः = आफ्नो, अयम् = यो, असत् = नभएको, अपि = पनि, क्लेशदः = दुःख दिने, देहः = शरीर, आस = हुन्छ।

श्रीधर :– कामान्नार्हतीति यदुक्तं तदुपपादयति। नूनमिति। यद्यदा इन्द्रियप्रीतये आप्रिणोति व्याप्रियते तदा प्रमत्तः सन्विकर्म पापं नूनं कुरुते यतो विकर्मणः प्राचीनादयम् असन्नपि नश्वरोऽपि

क्लेशदो देहो जातस्तस्यैव पुनः करणं साधु न मन्ये ।

नेपालीमा अर्थ :– मानिस अवश्य नै प्रमादवश कुकर्म गर्न थाल्दछ । किनभने उसको त्यो प्रवृत्ति इन्द्रियहरूलाई तृप्त गर्नका लागि नै हुन्छ । यो कुरा राम्रो होइन । किनकि त्यसैका कारणले नै जीवात्माले यो असत् तथा दुःखदायक देह प्राप्त गर्दछ । श्रुति भन्दछ । जस्तै – *'यदिदं किञ्च जगत्सर्वं प्राण एजति निःसृतम् । महद्भयं वज्रमुद्यतं य एतद्विदुरमृतास्ते भवन्ति ॥' (कठोपनिषद् २।३।२)*

५. *पराभवस्तावदबोधजातो यावन्न जिज्ञासत आत्मतत्त्वम् ।*
*यावत्क्रियास्तावदिदं मनो वै कर्मात्मकं येन शरीरबन्धः ॥*

हुँदैन जैलेतक आत्मबोध, छोपिन्छ आत्मा र हुँदैन बोध ।
काम्यादि ती कर्महरू गरेर, बाँधिन्छ नै बन्धनमा परेर ॥

शब्दार्थ :– पराभवः = तिरस्कार, तावत् = त्यति बेलासम्म, अबोधजातः = अज्ञानद्वारा हुने, यावत् = जबसम्म, न जिज्ञासते = जान्ने इच्छा गर्दैन, आत्मतत्त्वम् = आफ्नो असली स्वरूपलाई, यावत् = जबसम्म, क्रियाः = कर्म गरिरहन्छ, तावत् = तबसम्म, इदम् = यो, मनः = मन, वै = निश्चय नै, कर्मात्मकम् = क्रियाशील भइरहन्छ, येन = जुन मनद्वारा, शरीरबन्धः = फेरि शरीररूपी बन्धन प्रप्त भइरहन्छ ।

श्रीधर :– देहादेर्नश्वरत्वात्क्रियानयमनर्थ इत्याशङ्क्याह । पराभवो देहादिना स्वरूपाभिभवोऽज्ञानकृतस्तावद्भवति । तत्र हेतुः । यावत्क्रियाः स्युस्तावदिदं मनो हि कर्मस्वभावमेव स्यात् ।

**येन कर्मात्मकेन मनसा ।**

**नेपालीमा अर्थ :–** जबसम्म जीवलाई आत्मतत्त्वको जिज्ञासा हुँदैन, तबसम्म अज्ञानवश देहादिद्वारा उसको स्वरूप छोपिइरहन्छ । जहिलेसम्म ऊ लौकिक र वैदिक कर्महरूमा लागिरहन्छ, तहिलेसम्म मनमा कर्मका वासनाहरू पनि निर्माण भइरहन्छन् र त्यस कर्मीलाई नाना योनिमा घुमिरहनुपर्दछ । श्रुति भन्दछ – *'इमं लोकं हीनतरं वा विशन्ति ।' (मु.उ.१।२।१०)*

६. *एवं मनः कर्मवशं प्रयुङ्क्ते अविद्ययाऽऽत्मन्युपधीयमाने ।*
*प्रीतिर्न यावन्मयि वासुदेवे न मुच्यते देहयोगेन तावत् ॥*

**अज्ञानले आवृत भै अनादि, ढाकिन्छ आत्मा बढि वासनादि ।**
**भासिन्छ पाताल हुँदैन पार, बिर्सिन्छ जो श्रीहरिको मुहार ॥**

**शब्दार्थ :–** एवम् = यसरी, मनः = मनले, कर्मवशम् = कर्मवासनाका अधीनमा परेको मनुष्यलाई, प्रयुङ्क्ते, अविद्यया = अज्ञानद्वारा, आत्मनि = आत्मालाई, उपधीयमाने = छोपिएपछि, प्रीतिः न = प्रेम हुँदैन, यावत् = तबसम्म, मयि = म, वासुदेवे = वासुदेवमा, न मुच्यते = मुक्त हुनसक्तैन, देहयोगेन = शरीरसँगको सम्बन्धबाट, तावत् = तबसम्म ।

**श्रीधर :–** उक्तमुपसंहरति । एवं पूर्वकृतं कर्म कर्तृभूतं मनः कर्मभूतं वशं प्रयुङ्क्ते पुनः कर्मनिष्ठं करोतीति । जीवन्मुक्त कर्मव्यावृत्त्यर्थमाह । अविद्यया इति । अविद्यया आत्मनि उपधीयमाने आच्छाद्यमाने सति एवं मनः कर्तृपुरुषं कर्मवशं प्रयुङ्क्त इति वा ।

नेपालीमा अर्थ :– यसरी अविद्याकाद्वारा आत्मस्वरूप ढाकिएपछि कर्मवासनाले वशीभूत भएको चित्त मान्छेलाई फेरि कर्म गर्नमा प्रवृत्त गराउँछ । जबसम्म भगवान् वासुदेवमा मान्छेले प्रीति गर्दैन तबसम्म ऊ देहबन्धनबाट छुट्तैन । श्रुति भन्दछ – *'अन्धन्तमः प्रविशन्ति येऽविद्यामुपासते ।' (इशास्योपनिषद् ९)*

७. *यदा न पश्यत्ययथा गुणेहां स्वार्थे प्रमत्तः सहसा विपश्चित् ।*
*गतस्मृतिर्विन्दति तत्र तापानासाद्य मैथुन्यमगारमज्ञः ॥*

विवेकको दृष्टि खुलेर मिथ्या, देख्तैन जैलेतक कर्म मिथ्या ।
अज्ञानका नै वशमा परेर, संसारमा पाउँछ कष्ट धेर ॥

शब्दार्थ :– यदा = जुन बेला, न पश्यति = देख्तैन, अयथा = मिथ्या, गुणेहाम् = इन्द्रियका चेष्टालाई, स्वार्थे = पुरुषार्थमा, प्रमत्तः = प्रयत्नशून्य, सहसा = अचानक, विपश्चित् = विद्वान् व्यक्ति, गतस्मृतिः = बिर्सिएर, विन्दति = प्राप्त गर्दछ । तत्र = त्यहाँ, तापान् = दुःखहरू, आसाद्य = पाएर, मैथुन्यम् = मैथुनसुखप्रधान भएको, अगारम् = गाहस्थ्र्य जीवन, अज्ञः = अज्ञानी ।

श्रीधर :– न केवलं देहयोगमात्रमनर्थान्तञ्चेत्याह । यदा गुणानामिन्द्रियाणामीहां चेष्टामयथा मिथ्या आत्मिया न भवतीति विपश्चिद्विवेकी सन्नपश्यति । तत्र तदा सहसा गतस्मृतिः स्वरूपस्मृति शून्यः सन्नज्ञो मूढो मैथुनसुखप्रधानं गृहं प्राप्य तापान्विन्दति ।

नेपालीमा अर्थ :– आफ्नै तुच्छ स्वार्थमा लिप्त जीव जबसम्म विवेकदृष्टिको आश्रय लिएर इन्द्रियका चेष्टाहरूलाई

मिथ्या सम्भन्दैन, तबसम्म आफ्नू स्वरूपलाई बिर्सिएर त्यस्तो मनुष्य अज्ञानवश विषयप्रधान घर व्यवहारमा चुर्लुम्म डुबिरहन्छ। त्यस्तो विषयासक्त मान्छेले नानाथरीका दुःखहरू पाइरहन्छ। श्रुतिले भनेको पनि छ। जस्तै – *'असुर्या नाम ते लोका अन्धेन तमसावृताः। ताँस्ते प्रेत्याभिगच्छन्ति ये के चात्महनो जनाः॥' (ईशावास्योपनिषद् ३)*

८. *पुंसः स्त्रिया मिथुनीभावमेतं तयोर्मिथो हृदयग्रन्थिमाहुः।*
*अतो गृहक्षेत्रसुताप्तवित्तैर्जनस्य मोहोऽयमहं ममेति॥*

दाम्पत्यको बन्धनमा परेर, अन्योऽन्यमा ग्रन्थि खडा गरेर।
स्त्रीपुत्र आदि सबमा भुलेर, बाँधिन्छ मान्छे ममम डुबेर॥

शब्दार्थ :– पुंसः = पुरुषको, स्त्रियाः = नारीको, मिथुनीभावम् = एकले अर्कालाई चाहनुलाई, एतम् = यो, तयोः = ती दुईको, मिथः = परस्परमा हुने, हृदयग्रन्थिम् = हृदयको गाँठो, आहुः = भन्दछन्, अतः = यसले, गृहक्षेत्रसुप्ताप्तवित्तैः = घर, खेत, छोरो, आफन्त र सम्पत्तिसमेतमा, जनस्य = मान्छेलाई, मोहः = मोह, अयम् = यो, अहं मम इति = म अनि मेरो भन्ने।

श्रीधर :– ननु यथोपयोगं स्त्रिया मिथुनीभूय सुखमात्रमनुभवतः कुतस्तापाः स्युस्तत्राह। पुंस इति। प्रत्येकं तयोरेकैको हृदयग्रन्थिरस्त्येव। एतं मिथः परस्परं स्थूलमन्यं हृदययोर्ग्रन्थिं दुर्भेदं वदन्ति। कुत इत्यत आह। अतोऽस्मान्मिथुनीभावात्। प्रत्येकं हृदयग्रन्थिना तु देहेन्द्रिमात्रेऽहं ममेति मोहोऽस्मात्तु

गृहादिभिर्विषयभूतैर्महान्मोहो भवेदित्यर्थः ।

नेपालीमा अर्थ :– स्त्री र पुरुषका बीचमा जुन परस्पर दाम्पत्यभाव हुन्छ, त्यसलाई ज्ञनीहरू हृदयको अर्को स्थूल र दुर्भेद्य ग्रन्थि भन्दछन् । देहाभिमानरूपी सूक्ष्म ग्रन्थिहरू चाहिँ तिनीहरूमा पहिलेदेखि नै भिन्नाभिन्नै विद्यमान छन् । यसैकारण नै जीवका देहेन्द्रियादिका अतिरिक्त घर, खेत, पुत्र, स्वजन र धन आदिमा पनि म र मेरो पनको मोह हुन्छ । श्रुति भन्दछ– *'न साम्परायः प्रतिभाति बालं प्रमाद्यन्तं वित्तमोहेन मूढम् । अयं लोको नास्ति पर इति मानी पुनः पुनर्वशमापद्यते मे ॥' (कठोपनिषद् १।२।६)*

९. *यदा मनोहृदयग्रन्थिरस्य कर्मानुबद्धो दृढ आश्लथेत ।*
*तदा जनः सम्परिवर्ततेऽस्माद् मुक्तः परं यात्यतिहाय हेतुम् ॥*

दाम्पदत्यको जञ्जिर भै विनाश, खुल्ला जसै ग्रन्थि भएर नाश ।
सारा अहंग्रन्थि भएर मुक्त, बन्ने छ मान्छे सहजै विमुक्त ॥

शब्दार्थ :– यदा = जब, मनोहृदयग्रन्थिः = मनरूपी हृदयको गाँठो, अस्य = यसको, कर्मानुबद्धः = कर्मले बाँधिएको, दृढः = बलियो, आश्लथेत = खुकुलो हुन्छ, तदा = त्यसबेला, जनः = मान्छे, सम्परिवर्तते = मुक्त हुन्छ, अस्मात् = यस मिथुनीभावबाट, मुक्तः = मुक्त भएर, परम् = परमपदमा, याति = प्राप्त हुन्छ, अतिहाय = छोडेर, हेतुम् = संसारको कारण भएको अहं र मम भन्ने भावलाई ।

श्रीधर :– कदा तर्हि तस्य निवृत्तिरत आह । यदास्य

जनस्य कर्मभिरनुबद्धो दृढो मनोरूपो हृदयग्रन्थिः शिथिलो भवेत्तदाऽस्मान्मिथुनीभावान्निवर्तते । ततश्च हेतुमहङ्कारं त्यक्त्वा मुक्तः सन्परंपदं याति ।

नेपालीमा अर्थ :– जहिले जुन समयमा म अनि मेरो भन्ने भावनाले बाँधिएको त्यस मान्छेको कर्मरूपी जालोले जेलिएको हृदयको गाँठो फुक्तछ, त्यसपछि मात्रै त्यो मान्छे मिथुनीभावबाट मुक्त हुन्छ । अनि मात्र अनर्थको कारण भएको म र मेरो भन्ने भावना समाप्त हुन्छ । त्यसो भएपछि ऊ मुक्त हुन्छ । श्रुतिले भनेको छ । जस्तै – *'भिद्यते हृदयग्रन्थिश्छिद्यन्ते सर्वसंशयाः । क्षीयन्ते चास्य कर्माणि तस्मिन्दृष्टे परावरे ॥' (मुण्डकोपनिषद् २।२।८)*

१०. *हंसे गुरौ मयि भक्त्यानुवृत्त्या वितृष्णाया द्वन्दतितिक्षया च ।*
*सर्वत्र जन्तोर्व्यसनावगत्या जिज्ञासया तपसेहानिवृत्त्या ॥*

वनी विवेकी गुरुभक्ति राख, छोडेर तृष्णा समभाव राख ।
लिई तितिक्षा व्रत सत्त्व भर्नु, निष्कामनाका सँग कर्म गर्नु ॥

शब्दार्थ :– हंसे = विवेक भएका, गुरौ = गुरुमा, मयि = ममा, भक्त्या = भक्तिद्वारा, अनुवृत्त्या = लागिरहने, वितृष्णया = तृष्णा छोडेर, द्वन्दतितिक्षया = सुखदुःखलाई सहेर, च = पनि, सर्वत्र = सबैतिर, जन्तोः = जीवात्मालाई, व्यसनावगत्या = दुःख हुन्छ भन्ने ठानेर, जिज्ञासया = जान्ने इच्छाद्वारा, तपसा = तपस्याद्वारा, ईहानिवृत्या = इच्छाको त्यागद्वारा ।

श्रीधर :– हेतुमतिहायेत्युक्तं तत्र पञ्चविंशति साधनान्याह

चतुर्भिः हंसे मयि गुरौ भक्तिः सेवा। अनुवृत्तिस्तत्परता। विगत तृष्णाया। सर्वत्र लोकान्तरेऽपि व्यसनावगत्या दुःखानुसन्धानेन। ईहानिवृत्त्या काम्यकर्मत्यागेन।

नेपालीमा अर्थ :– हे पुत्रहरू हो ! गुरु र भगवान्‌मा भक्ति राख। तृष्णा छोड। सुख दुःख आदि द्वन्दलाई सहू। जीवलाई सर्वत्र दुःख हुन्छ भन्ने कुरा बुझ। सत् वस्तु र असत् वस्तुको विवेक गर। तपस्या गर। सकाम कर्मको परित्याग गर्न। श्रुति भन्दछ – *'इहैव सर्वे प्रविलीयन्ति कामाः' (मुण्डकोपनिषद् ३।२।२)।*

११. *मत्कर्मभिर्मत्कथया च नित्यम् मद्देवसङ्गाद् गुणकीर्तनान्मे।*
*निर्वैरसाम्योपशमेन पुत्रा जिहासया देहगेहात्मबुद्धेः॥*

मेरो कथा सुन्नु र भक्तसाथ, सत्सङ्ग गर्दा नलिनू प्रमाद।
निर्वैर होऊ ममभाव छोड, छोडी अहम् लिङ्गशरीर छोड॥

शब्दार्थ :– मत्कर्मभिः = म भगवान्‌मा समर्पित कर्महरूद्वारा, मत्कथया = मेरो कथाको श्रवणद्वारा, च = पनि, नित्यम् = सधैँ, मद्देवसङ्गात् = मेरा भक्तहरूका सङ्गतद्वारा, मे = मेरो, गुणकीर्तनात् = गुणकीर्तनद्वारा, निर्वैरसाम्योपसमेन = वैरभावरहित समानता र शान्तिभावद्वारा, पुत्रा = हे छोराहरू हो ! जिहासया = छोडेर।

श्रीधर :– मदर्थैः कर्मभिः। अहमेव देवो येषां तैः सङ्गात्। हे पुत्राः देहगेहयोरात्मबुद्धेरहंममेति बुद्धेः।

नेपालीमा अर्थ :– हे छोराहरू हो !' ममा समर्पण गरिएको कर्म, मेरो कथा श्रवण, सदासर्वदा गरिएको मेरा भक्तहरूसँगको सङ्गत, मेरो गुणकीर्तन, विनावैरभाव राखिएको समानता र

शान्तिभावद्वारा शरीर तथा घरमा हुने म र मेरो भन्ने भावको परित्याग गरेर अहङ्कारात्मक लिङ्ग शरीरलाई त्याग गर्नुपर्दछ । श्रुति भन्दछ । जस्तै – *'ईशावास्यमिदं सर्वं यत्किञ्च जगत्याञ्जगत् । तेन त्यक्तेन भुञ्जीथा मा गृधः कस्यस्विद्-धनम् ॥' (ईशावास्योपनिषद् १)*

१२. *अध्यात्मयोगेन विविक्तसेवया प्राणेन्द्रियात्माभिजयेन सध्र्यक् ।*
*सच्छ्रद्धया ब्रह्मचर्येण शश्वद् असम्प्रमादेन यमेन वाचाम् ॥*

अध्यात्मको चिन्तन संयमादि, एकान्तको वास र सत्क्रियादि
श्रद्धा गरी सज्जनवाक्य माथि, लाऊ सबैले मन ईशमाथि ॥

शब्दार्थ :– अध्यात्मयोगेन = अध्यात्मतर्फ लाग्नाले, विविक्तसेवया = एकान्त स्थानमा बस्नाले, प्राणेन्द्रियात्मा-भिजयेन = प्राण, इन्द्रियहरू र मनलाई जित्नाले, सध्र्यक् = राम्रैसँग, सच्छ्रद्धया = सज्जनहरूमा श्रद्धाराख्नाले, ब्रह्मचर्येण = ब्रह्मचर्यमा रहनाले, शश्वत् = सर्वदा, असम्प्रमादेन = प्रमत्त नहुनाले, यमेन = नियन्त्रण गर्नाले, वाचाम् = वचनलाई ।

श्रीधर :– अध्यात्मयोगेनाध्यात्मशास्त्राभ्यासेन सध्र्यक् सम्यक् इति सर्वत्र सम्बन्धः । असम्प्रमादेन कर्तव्यस्य अपरित्यागेन ।

नेपालीमा अर्थ :– अध्यात्मशास्त्रको अनुशीलन गर्नु । एकान्तको सेवन गर्नु । प्राण, इन्द्रिय र मनमाथि नियन्त्रण गर्नु । सज्जनहरूमा श्रद्धा गर्नु । ब्रह्मचर्यको पालन गर्नु । बोलीमाथि संयम गर्नु । श्रुतिभन्दछ – *'यदा सर्वे प्रमुच्यन्ते कामा येऽस्य हृदि श्रिताः' (कठोपनिषद् २।३।१४)*

१३. *सर्वत्र मद्भावविचक्षणेन ज्ञानेन विज्ञानविराजितेन ।*
*योगेन धृत्युद्यमसत्त्वयुक्तो लिङ्गं व्यपोहेत् कुशलोऽहमाख्यम् ॥*

सर्वत्र जानी हरिको उपस्थिति, विज्ञानले युक्त लिई सफा मति ।
विवेकका साथ गरी प्रयत्न, अहं गरे नाश गरेर यत्न ॥

शब्दार्थ :– सर्वत्र = सबैतिर, मद्भावविचक्षणेन = मलाई देख्नाले, विज्ञानविराजितेन = अनुभवयुक्त हुनाले, ज्ञानेन = ज्ञानले, योगेन = ध्यानले, धृत्युद्यमसत्त्वयुक्तः = धैर्य, प्रयास र विवेकले युक्त, कुशल = निपुण मनुष्यले, अहमाख्यम् = अहङ्कारात्मक, लिङ्गम् = सूक्ष्मशरीरलाई, व्यपोहेत् = छोडोस् ।

श्रीधर :– सर्वत्र मद्भावो मद्भावना तत्र विचक्षणेन निपुणेन विज्ञानविराजितेनानुभवपर्यन्तेन ज्ञानेन योगेन समाधिना धृत्युद्यमसत्त्वयुक्तो धैर्यप्रयत्नविवेकैर्युक्तः सन्नहं त्यागेन ।

नेपालीमा अर्थ :– सर्वत्र भगवान् भएको अनुभव गर्ने गर । अनुभवले युक्त भएको ज्ञान गर्ने गर । भगवान्को ध्यान गर्ने गर । धैर्यशील बन । असल मान्छे बन्ने प्रयत्न गर । यी सबै गुणहरूले सम्पन्न भएको निपुण पुरुषले नै संसृतिको एकमात्र कारण भएको अहङ्कारात्मक लिङ्गशरीरलाई नाश गर्न सक्तछ । अन्यथा सम्भव हुँदैन । यसतर्फ तिमीहरू सधैँ विचार गर । श्रुतिले भनेको छ – *'तमेव विदित्वाऽतिमृत्युमेति नान्यः पन्था विद्यतेऽयनाय' (श्वेताश्वतरोपनिषद् ३।८)*

१४. *कर्माशयं हृदयग्रन्थिबन्धमविद्ययासादितमप्रमत्तः ।*
*अनेन योगेन यथोपदेशं सम्यग् व्यपोह्योपरमेत योगात् ॥*

अत्यन्त नै भैकन सावधान, काटी अहंग्रन्थी तमोऽभिधान ।
गरी अविद्यामय कर्मनाश, गर्दौं सबै साधनको विनाश ॥

शब्दार्थ :– कर्माशयम् = कर्मको वासना, हृदयग्रन्थिबन्धनम् = कर्मको आधार, अविद्ययासादितम् = अज्ञानका कारण प्राप्त, अप्रमत्तः = सावधान मनुष्यले, अनेन = माथि भनिएका, योगेन = योगद्वरा, यथोपदेशम् = बताइए अनुसार, सम्यक् = राम्रोसँग, व्यपोह्य = पन्साएर, योगात् = माथि भनिएका उपायहरूद्वारा, उपरमेत = निवृत्त हुनु ।

श्रीधर :– ततः साधनादुपरमेदित्याह । कर्माण्याशेरते यस्मिन् । योगेनोपयेन । यद्यपि फले सिद्धे साधनोपरमः सिद्ध एव । तथापि यावद्देहपातं तदभ्यासशङ्कावारणाय ।

नेपालीमा अर्थ :– आत्मकल्याणको इच्छा गर्ने मनुष्यले सर्वप्रथम अत्यन्त सावधान भएर मायानिर्मित हृदयग्रन्थिरूप बन्धनलाई शास्त्रमा वर्णन गरिएका रीत अनुसार माथि बताइएका साधनहरूद्वारा काटेर फ्याँक्नु पर्दछ । किन हृदयग्रन्थिलाई काटेर फ्याँक्ने भने त्यही ठाउँ नै अनन्त जन्महरूदेखि सञ्चित हुँदै आइरहेका कर्महरूका संस्कार वा वासनाहरू जम्मा हुने ठाउँ हो । हृदयग्रन्थिलाई भेदन गरेपछि भेदन गर्न अवलम्बन गरिएका श्रवण, मनन, सत्सङ्ग, तितिक्षा आदि सारा साधनहरू समेत उपदेश दिने र गुरु र शस्त्रहरू समेतलाई छोडिदिनु । श्रुति भन्दछ – *'आहारशुद्धौ सत्त्वशुद्धिः सत्त्वशुद्धौ ध्रुवा स्मृतिः स्मृतिलम्भे सर्वग्रन्थीनां विप्रमोक्षः' (छा(उ.७।२६।२)*

१५. *पुत्रांश्च शिष्यांश्च नृपो गुरुर्वा मल्लोककामो मदनुग्रहार्थः ।*
*इत्थं विमन्युरनुशिष्यादतज्ज्ञान् न योजयेत्कर्मसु कर्ममूढान् ।*
*कं योजयन्मनुजोऽर्थं लभेत निपातयन्नष्टदृशं हि गर्ते ॥*

राखी दया भूप र बाबुबाट, तारुन् प्रजा शिष्य भवाब्धिबाट ।
अज्ञानका कारण कर्म तर्फ, नजान देउन् दुःख गर्त तर्फ ।
अन्धोसँगै जो पछि लागि हिँड्छन्,ती आखिरी खाडल भित्र झर्छन् ॥

शब्दार्थ :– पुत्रांश्च = छोराहरूलाई, शिष्यांश्च = शिष्य वा प्रजाहरूलाई, नृपः = राजाले, गुरुः = गुरुले, वा = अथवा, मत् = मेरो, लोककामः = लोकको इच्छा गर्नेले, मदनग्रहार्थः = मेरो अनुग्रहको इच्छा गर्नेले, इत्थम् = यसरी, विमन्युः = रिस त्यागेको, अनुशिष्यात् = शिक्षा देओस्, अतज्ज्ञान् = तत्त्व नजान्ने, न योजयेत् = न लगाओस्, कर्मसु = सकाम कर्महरूमा, कर्ममूढान् = कर्ममा आसक्त अज्ञानीहरूलाई, कम् = के, योजयन् = प्रवृत्त गर्ने, मनुजः = मान्छेले, अर्थम् = प्रयोजन, लभेत = प्राप्त गर्ला, निपातयन् = खसाउने, नष्टदृशम् = अन्धा मान्छेलाई, हि = अवश्य नै, गर्ते = खाल्टामा ।

श्रीधर :– किञ्च । पुत्रान्पिता शिष्यान्वा गुरुर्नृपश्च प्रजा एवमनुशिक्षयेत् मम लोकं य कामयते । यद्वा । मदनुग्रह एवार्थो यस्य । विमन्युः शिक्षितस्याकरणेऽपि कोपशून्यः । अतज्ज्ञांस्तत्वमविदुषः । श्रेयोबुद्धया कर्मसु मूढान् । अन्यथोपदेशे प्रत्यवायमाह । मनुजः काम्यकर्मसु पुरुषं योजयन् गर्ते संसारकूपे तं पातयति स मनुजः कमर्थं पुरुषार्थं लभेत । न कमपि इत्यर्थः ।

नेपालीमा अर्थ :– जसलाई मेरो लोकको इच्छा हुन्छ अथवा जसले मेरो अनुग्रह प्राप्तिलाई परमपुरुषार्थ मान्दछन्, त्यसता राजा भए आफ्ना अबोध प्रजाहरूलाई, गुरुले आफ्ना शिष्यहरूलाई र बाबुले आफ्ना छोराहरूलाई शिक्षा दिऊन् । अज्ञानका कारण यदि ती प्राप्त शिक्षाका अनुरूप न हिँडेर काम्यकर्मलाई नै परम पुरुषार्थ मान्दछन् भने पनि त्यसतामाथि क्रोध नगरेर त्यसता अज्ञानी कर्मीहरूलाई सम्झाइबुझाइ गरेर काम्यकर्म तर्फबाट विरत गराएर भक्ति र ज्ञानमार्गतर्फ लगाउन्, तिनलाई विषयासक्तियुक्त काम्यकर्मतिर लगाउनु भनेको ता अन्धाका पछि लागेको अन्धालाई खाडलतर्फ धकेल्नु जस्तै हो । यसबाट कुनै पनि पुरुषार्थको सिद्धि हुँदैन । श्रुति भन्दछ । जस्तै – *'अविद्यायामन्तरे वर्तमानाः स्वयं धीराः पण्डितम्मन्यमानाः । दन्द्रम्यमाणाः परियन्ति मूढा अन्धेनैव नीयमाना यथान्धाः ॥' (कठोपनिषद् १।२।५)*

१६. *लोकः स्वयं श्रेयसि नष्टदृष्टि–*
*र्योऽर्थान् समीहेत निकामकामः ।*
*अन्योन्यवैरः सुखलेशहेतो–*
*रनन्तदुःखञ्च न वेद मूढ ॥*

कल्याण आफ्नू नबुझेर खास,
भोगार्थकै मानिस गर्छ आश ।
लड्दै सधैँ खोज्दछमात्र सुक्ख,
त्यो अन्त्यमा पाउँछ मात्र दुःख ॥

**शब्दार्थ :–** लोकः = मनुष्य आफैँ, श्रेयसि = कल्याणमार्गमा, नष्टदृष्टिः = विवेक नभएको, यः = जुन, अर्थान् = विषयहरू, समीहेत = इच्छा गर्दछ, निकामकामः = अत्यन्त भोगलम्पट, अन्योऽन्यवैरः = आपसमा वैरभाव, सुखलेशहेतो = थोरै सुखका लागि, अनन्तदुःखम् = ठूलो दुःख, च = पनि, न वेद = जान्दैन, मूढः = मूर्ख मान्छेले ।

**श्रीधर :–** न योजयेदित्येतदुपपादयति । लोक इति त्रिभिः । नष्टदृष्टित्वे हेतुः । य इति । निकाममतिशयेन कामो यस्य ।

**नेपालीमा अर्थ :–** आफ्नू सही कल्याण कुन कुरामा छ भन्ने कुरा मानिसले बुझ्दैन । यसै कारण अज्ञानी पुरुष नानाथरीका कामनाहरू मनमा लिएर क्षणिक सुखभोगका लागि आफू आफूमा वैरभाव लिएर यस दुःखद संसारमा नै हिरिक्क हुन्छन् । ती मूर्खहरू यसको परिणति नरक आदिमा गएर अनन्त दुःखहरू भोग्नुपर्ने कुरामा ध्यान नै दिँदैनन् । श्रुति भन्दछ । जस्तै :– *'गुणान्वयो यः फलकर्मकर्ता कृतस्य तस्यैव स चोपभोक्ता । स विश्वरूपस्त्रिगुणस्त्रिवर्त्मा प्राणाधिपः सञ्चरति स्वकर्मभिः ॥' (श्वेताश्वतरोपनिषद् ५।७)*

१७. *कस्तं स्वयं तदभिज्ञो विपश्चित्*
*अविद्यायामन्तरे वर्तमानम् ।*
*दृष्ट्वा पुनस्त्वं सघृण कुबुद्धिं*
*प्रयोजयेदुत्पथगं यथान्धम् ॥*

**जो जान्छ खाल्टा तिर पर्न कोही,**
**दयालु गै रोक्तछ पर्न सोही ।**

त्यस्तै कुनै संसृतितर्फ अज्ञ,

जाँदा कहाँ दिन्छ र जान विज्ञ ॥

शब्दार्थ :– उत्पथगम् = खराब मार्गगामी, अन्धम् = अन्धो मान्छेलाई, यथा = जस्तै, अविद्यायाम् = अविद्याका, अन्तरे = बीचमा, वर्तमानम् = रहेको, कुबुद्धिम् = खराब बुद्धि भएको, तम् = मान्छेलाई, दृष्ट्वा = देखेर, पुनः फेरि, सघृणः = दयालु, तदभिज्ञः = त्यो कुरा जान्ने, कः = कुन, विपश्चित् = ज्ञानीले, तम् = त्यसलाई, स्वयम् = आफै नै, प्रयोजयेत् = सकाम वा काम्य कर्ममा लगाउला ।

श्रीधर :– तमीदृशं कुबुद्धिं दृष्ट्वा तत्रैव कस्तं प्रवर्तयेन्न कोऽपि । उत्पथेन गच्छन्तं अन्धं यथा ते नैव गच्छ इति को ब्रूयात् ।

नेपालीमा अर्थ :– खाल्टोमा पर्न उल्टो बाटो जान लागेको अन्धो मान्छेलाई जसरी आँखा देख्ने मान्छेले खाल्टातिर जान दिँदैन, त्यसैगरेर अविद्यामा फसेको अज्ञानी मानिस दुःखद संसारतिर जान लागेको देखेर कुन यस्तो ज्ञानी पुरुष होला जानी जानी जसले जान देला ? वा जाने प्रेरणा देला ? अवश्य नै दिँदैन । श्रुति भन्दछ । जस्तै – *'परीक्ष्य लोकान्कर्मचितान्ब्राह्मणो निर्वेदमायान्नास्त्यकृतः कृतेन । तद्विज्ञानार्थं स गुरुमेवाभिगच्छेत् समित्पाणिः श्रोत्रियं ब्रह्मनिष्ठम् ॥' (मुण्डकोपनिषद् १।२।१२)*

१८. *गुरुर्न स स्यात्स्वजनो न स स्यात्*

*पिता न स स्याज्जननी न सा स्यात् ।*

*दैवं न तत्स्यान्न पतिश्च स स्या–*
*न्न मोचयेद्यः समुपेतमृत्युम् ।*

**ती ता हुँदैनन् गुरु बन्धु दारा,**
**मातापिता वा स्वजनै सहारा ।**
**द्यौता हउन् वा पति हुन् अवश्य,**
**हुँदैन मृत्यु जसबाट वश्य ॥**

**शब्दार्थ :– गुरुः = गुरु वा आचार्य, स = त्यो, न स्यात् = होइन, स्वजनः = आफ्नू मानिस, स = त्यो, न स्यात् = होइन, पिता = बाबु, स = त्यो, न स्यात् = होइन, जननी = आमा, सा = तिनी, न स्यात् = होइनन् । दैवम् = देवता, तत् = त्यो, न स्यात् = होइनन्, पतिश्च = लोग्ने, स = त्यो, न स्यात् = होइन, यः = जसले, समुपेतमृत्युम् = आइलागेको मृत्युबाट, न मोचयेत् = मुक्त गराउँदैन ।**

**श्रीधर :– समुपेतः सम्प्राप्तो मृत्यु संसारो येन तम् । ततो भक्तिमार्गोपदेशेन य नमोचयेत्स गुर्वादिर्न भवतीत्यर्थः । यद्वा यस्तं मोचयितुं न शक्नुयात्स तस्य गुर्वादिर्न स्यादिति निषेधः । ततश्च पिता न स्यादिति पुत्रोत्पत्तौ यत्न न कार्य इत्यर्थः । दैवं देवता न स्यादिति पूजा न ग्राह्येत्यर्थः । एवमन्यदपि द्रष्टव्यम् ।**

**नेपालीमा अर्थ :– जसले आफ्ना स्वजनहरूलाई भक्ति र ब्रह्मज्ञानको उपदेश दिएर मृत्युरूपी भयबाट मुक्त हुन सहयोग गर्दैन, त्यो गुरु होइन, स्वजन होइन, पिता होइन, माता होइन, इष्टदेव होइन र पति पनि होइन । श्रुति भन्दछ –** ***'न वा अरे***

*पत्युः कामाय पतिः प्रियो भवत्यात्मनस्तु कामाय पतिः प्रियो भवति । न वा अरे जायायै कामाय जाया प्रिया भवत्यात्मनस्तु कमाय जाया प्रिया भवति । न वा अरे भूतानां कामाय भूतानि प्रियाणि भवन्त्यात्मनस्तु कामाय भूतानि प्रियाणि भवन्ति । न वा अरे सर्वस्य कामाय सर्वं प्रियं भवत्यात्मनस्तु कामाय सर्वं प्रियं भवति ।' (बृ.उ.२।४।५)*

१९. *इदं शरीरं मम दुर्विभाव्यं सत्त्व हि मे हृदयं यत्र धर्मः ।*
*पृष्ठे कृतो मे यदधर्म आराद् अतो हि मामृषभं प्राहुरार्याः ॥*

शरीर मेरो अति नै अगम्य, छ बुद्धिमा धर्म सदैव गम्य ।
अधर्म मेरो छ पछाडि धार्य, भन्छन् मलाई ऋषभाख्य आर्य ॥

**शब्दार्थ :– इदम् = यो, शरीरम् = शरीर, मम = मेरो, दुर्विभाव्यम् = जान्न नसकिने, सत्त्वम् = शुद्ध सत्त्वयुक्त, हि = निश्चय नै, मे = मेरो, हृदयम् = हृदय, यत्र = जसमा, धर्मः = धर्म छ, पृष्ठे = पछाडि, कृतः = गरेको छु, मे = मैले, यत् = जसबाट, अधर्मः = अधर्मलाई, आरात् = टाढैबाट, अतः = यसैले, हि = निश्चय नै, माम् = मलाई, ऋषभम् = ऋषभदेव, प्राहुः = भन्दछन् । आर्याः = सभ्य व्यक्तिहरू ।**

**श्रीधर :– एवं मोक्षधर्मानुपदिश्य भ्रातृशुश्रूषलक्षणं धर्मं स्पर्धादिनिवृत्तये तेषां जन्मकथन पूर्वकमाह द्वाभ्याम् । इदं मनुष्याकारं शरीरं मम दुर्विभाव्यमवितर्क्यं मदिच्छाविलसितम् । न त्वहं प्राकृतो मनुष्य इत्यर्थः । मे हृदयं तु सत्त्वम् । किं तद्धृदयम्, यत्र धर्मस्तत्, शुद्धं सत्त्वमित्यर्थः । कुतः, मयाऽधर्मो**

दूरादेव पृष्ठे कृत उत्सारितः, अत एव मामृषभं श्रेष्ठं प्राहुः ।

**नेपालीमा अर्थ :–** मेरो यस शरीरको रहस्य सामान्य मान्छेले बुझ्न सक्तैन । शुद्ध सत्त्व नै मेरो हृदय हो । त्यसमा धर्म रहन्छ । मैले अधर्मलाई मदेखि धेरै टाढा पृष्ठभागमा धकेलेको छु । यसैकारण ज्ञानीहरू मलाई ऋषभ अर्थात् श्रेष्ठ भन्दछन् । श्रुति भन्दछ । जस्तै – *'तं दुर्दर्शं गूढमनुप्रविष्टं गुहाहितं गह्वरेष्ठं पुराणम् ॥'* (कठोपनिषद् १।२।१२)

२०. *तस्माद्भवन्तो हृदयेन जाताः सर्वे महीयांसममुं सनाभम् ।*
*अक्लिष्टबुद्ध्या भरतं भजध्वं शुश्रूषणं तद्भरणं प्रजानाम् ॥*

मेरा सबै हौ अति शुद्ध पुत्र, छोडे तिमी मत्सर भै सुपुत्र ।
यी दाजुलाई सबले सघाऊ, राजा बनाई अघि लौ बढाऊ ॥

**शब्दार्थ :– तस्मात्** = त्यसैले, **भवन्तः** = छोराहरू, **हृदयेन** = भित्रैबाट, **जाताः** = उत्पन्न भएका, **सर्वे**, सबै, **महीयांसम्** = श्रेष्ठ, **अमुम्** = यी, **सनाभम्** = राजा नाभिका सन्तान, **अक्लिष्टबुद्ध्या** = शुद्ध बुद्धिद्वारा, **भरतम्** = दाजु भरतलाई, **भजध्वम्** = मान्नु, **शुश्रूषणम्** = सेवा गर्नु, **तत्** = भरतको, **भरणम्** = पालन गर्नु हो, **प्रजानाम्** = प्रजाहरूको ।

**श्रीधर :–** भवन्तश्च हृदयेन शुद्धसत्त्वमयेन जातास्तस्मात्मत्सरं हित्वा महत्तमं सनाभं सोदरं भजध्वम् । ननु त्वत्पुत्रत्वात् त्वं वयं भजेम राजपुत्रत्वात्प्रजाश्च पालयेमेति चेदत आह । तदेव मे शुश्रूणं प्रजानां पालनम् । भरतानुवृत्त्यैव सर्वं कृतं स्यादिति भावः ।

**नेपालीमा अर्थ :–** तिमीहरू सबै मेरा शुद्ध सत्त्वमय हृदयबाट

जन्मिएका हौ । यसैकारण तिमीहरूले कुनै खालको अन्यथाभाव नराखीकन आफ्ना जेठा दाजु भरतको सेवा गर्नू । उनको सेवा गर्नु मेरो नै सेवा गर्नु हो र त्यही नै तिमीहरूको प्रजापालन पनि हो । *'आत्मा वै जायते पुत्रः ।'*

२१. *भूतेषु वीरुद्भ्य उदुत्तमा ये सरीसृपास्तेषु सबोधनिष्ठाः ।*
*ततो मनुष्याः प्रथमास्ततोऽपि गन्धर्वसिद्धा विबुधानुगा ये ॥*

हुन् श्रेष्ठ वृक्षादि अचेतभन्दा, गौ आदि हुन् उत्तम वृक्षभन्दा ।
मनुष्य हो श्रेष्ठ र गायकादि, हुन् श्रेष्ठ भन् सिद्ध र किन्नरादि ॥

शब्दार्थ :– भूतेषु = सबै भौतिक वस्तुहरूमा, वीरुद्भ्यः = वृक्षहरू, उदुत्तमाः = साह्रै वेश हुन्, ये = जुन, सरीसृपाः = घस्रिएर हिड्ने प्राणीहरू उत्तम छन्, तेषु = तिनीहरूमा, सबोधनिष्ठा = ज्ञानीहरू श्रेष्ठ छन् । ततः = तीभन्दा, मनुष्याः = मनुष्यहरू श्रेष्ठ छन्, प्रमथाः = प्रमथगण, ततः = त्यसभन्दा, अपि = पनि, गन्धर्वसिद्धाः = गन्धर्व र सिद्ध, विबुधानुगाः = किन्नर आदि, ये = जुन छन् ।

श्रीधर :– इदानीं ब्राह्मणाश्च सेव्या इत्याशयेन तेषां सर्वेभ्यः श्रैष्ठ्यमाह पञ्चभिः । भूतेषु चेतनाचेतनेषु । विरोहन्तीति वीरुधः स्थावरा उदुच्चैरतिशयेनोत्तमाः, तेभ्योऽपि ये सरीसृपाः सर्पन्तीति जङ्गमास्ते उदुत्तमा इति सर्वज्ञानुषङ्गः । तेष्वपि सबोधा निष्ठा स्थितिर्येषां पश्वादीनां ते कीटकादिभ्यः । ततस्तेष्वपि मनुष्याः । ततोऽपि प्रमथा भूतप्रेतादयः । ततोऽपि गन्धर्वाः ततः सिद्धाः । ततोऽन्ये विवुधानुगाः किन्नरादयः ।

**नेपालीमा अर्थ :–** अरू सबै भूतहरूभन्दा अचर वृक्ष श्रेष्ठ, त्यो भन्दा चर कीरा आदि श्रेष्ठ, ती भन्दा गाई आदि पशुहरू श्रेष्ठ, तिनमा पनि मनुष्य श्रेष्ठ, मनुष्यभन्दा प्रमथगण, तीभन्दा गन्धर्व, तीभन्दा सिद्ध र सिद्धभन्दा किन्नरहरू श्रेष्ठहुन् । श्रुति भन्दछन् – *'स ईक्षतेमे नु लोका लोकपालान्नु सृजा इति सोऽद्भ्य एव पुरुषं समुद्धृत्यामूर्छयत् ।' (ऐतरेयोपनिषद् १।१।३)*

२२. *देवासुरेभ्यो मघवत्प्रधानाब्रह्मादयो ब्रह्मसुतास्तु तेषाम् ।*
*भवः परः सोऽथ विरिञ्चवीर्यः स मत्परोऽहं द्विजदेवदेवः ॥*

हुन् श्रेष्ठ दैत्यादि र देवतादि, इन्द्रादि दक्षादि र रुद्र आदि ।
ब्रह्मा अनि श्रेष्ठ पछाडि हूँ म, मदेखि हुन् ब्राह्मण उच्च के ? म ॥

**शब्दार्थ :–** देवाः = देवताहरू, असुरेभ्यः = असुरहरूभन्दा, मघवत्प्रधानाः = इन्द्रादि श्रेष्ठ हुन् । दक्षादयः = दक्ष आदि, ब्रह्मसुताः = ब्रह्माजीका छोराहरू श्रेष्ठ छन्, तेषाम् तु = तिनीहरूमा, भवः = महादेव, परः = श्रेष्ठ हुनुहुन्छ । स = उहाँ, विरिञ्चवीर्यः = ब्रह्माजीका छोरा हुनुहुन्छ, अथ = यसै उसले, सः = ब्रह्माजी, मत्परः = मेरा भक्त हुनुहुन्छ, अहम् = म, द्विजदेवदेवः = ब्राह्मणलाई देवता मान्दछु ।

**श्रीधर :–** तेभ्योऽसुराः, देवा असुरेभ्यः, देवाश्च मघवत्प्रधानाः, देवेभ्य इन्द्रः श्रेष्ठ इत्यर्थः, ततोऽपि ब्रह्मसुता दक्षादयः, तेषां मध्ये भवः परः श्रेष्ठः । स भवो विरिञ्चवीर्यो विरिञ्चो वीर्यं शक्तिः कारणं यस्य स विरिञ्चवीर्यः, अतस्तज्जनकत्वाद्विरिञ्चस्ततः पर इत्यर्थः । स विरिञ्चो

मत्परः अहं परो यस्य । द्विजदेवा ब्राह्मणा एव देवाः पूज्या यस्य सोऽहम् ।

नेपालीमा अर्थ :– किन्नरहरूभन्दा असुरहरू श्रेष्ठ हुन् । असुर भन्दा देवताहरू श्रेष्ठ हुन् । देवताहरूमा इन्द्र श्रेष्ठ हुन् । इन्द्रभन्दा दक्ष आदि प्रजापति श्रेष्ठ हुन् । तीभन्दा रुद्र श्रेष्ठ हुन् । त्यसपछि ब्रह्माजी श्रेष्ठ हुन् । ब्रह्मा भन्दा म श्रेष्ठ हुँ र म भन्दा ब्राह्मणाहरू श्रेष्ठ हुन् । श्रुति भन्दछ – *'ब्राह्मणोऽस्यमुखमासीद्वाहुराजन्यः कृतः । ऊरु तदस्य यद्वैश्यः पद्भ्यां शूद्रो अजायत ।' (शुक्लयजुर्वेदः ३१।११*

२३. *न ब्राह्मणैस्तुलये भूतमन्यत् पश्यामि विप्राः किमतः परं तु ।*
*यस्मिन्नृभिः प्रहुतं श्रद्धयाह मश्नामि कामं न तथाग्निहोत्रे ॥*

हुन् विप्र यी श्रेष्ठ समान कुन्छ ? खाए यिनैले सब पूर्ण हुन्छ ।
खाए यिनैले म कृतार्थ हुन्छु, न अग्निहोत्रादिकबाट हुन्छु ॥

शब्दार्थ :– ब्राह्मणैः = ब्राह्मणहरूसँग, न तुलये = तुलना गर्न सकिँदैन, अन्यत् भूतम् = अरू प्राणीहरूको, अतः = ती ब्राह्मणहरूभन्दा, परं तु = श्रेष्ठ चाहिँ, किं पश्यामि = कसरी देख्तछु ? यस्मिन् = जुन ब्राह्मणहरूमा, नृभिः = मान्छेहरूद्वारा, प्रहुतम् = हवन गरिएको, श्रद्धया = श्रद्धापूर्वक, अहम् = म, अश्नामि = खान्छु, कामम् = प्रशस्त, तथा = त्यसरी, न अग्निहोत्रे = अग्निहोत्रमा गरिएको हवनबाट पाउँदिन ।

श्रीधर :– ब्राह्मणैरन्यद्भूतं न तुलये समं न पश्यामि । अतो ब्राह्मणात्परं तु भूतं किं पश्यामि न किञ्चित् । विप्रा

इति तत्रत्यानां ब्राह्मणानां सम्बोधनम् । समस्यैवाभावादधिकं कुतस्त्यमित्यर्थः । तत्र हेतूनाह सार्धाभ्याम् । यस्मिन्ब्राह्मणे श्रद्धया प्रकर्षेण हुतमन्नादि कामं यथेच्छमहमश्नामि ।

नेपालीमा अर्थ :– ब्राह्मणहरू सरह संसारमा म अरू कसैलाई पनि श्रेष्ठ ठान्दिन भने यी भन्दा श्रेष्ठ ता कल्पनै गर्न सक्तिन । मानिसहरू श्रद्धापूर्वक ब्राह्मणका मुखमा जुन आहुति हाल्दछन्, त्यो म अग्निहोत्रमा होम गरिएको सामग्रीभन्दा पनि श्रेष्ठ ठानेर ग्रहण गर्दछु । श्रुति भन्दछ – *'विप्राशितं देवा अश्नन्ति विप्राशितं पितरोऽश्नन्ति विप्राशितं देवदेवो विष्णुरश्नाति, इति ।'*

२४. *धृता तनूरुशती मे पुराणी येनेह सत्त्वं परमं पवित्रम् ।*
*शमो दमः सत्यमनुग्रहश्च तपस्तितिक्षानुभवश्च यत्र ॥*

मेरा पुराना स्वशरीरधारी, सत्त्वादि आठै गुणयुक्त भारी ।
यी वेद नै जङ्गम विप्र साथी, को हुन्छ ठूलो, यिनदेखि माथि ॥

शब्दार्थ :– इह = उपर्युक्त प्राणीहरूमा, येन = ब्राह्मणले, मे = मेरो, पुराणी = पुरानो, उशती = सुन्दर, तनूः = शरीर, धृता = धारण गरेका, यत्र = जसमा, परमम् = अति नै, पवित्रम् = पवित्र, सत्त्वम् = सत्त्वगुण, शमः = मनोनिग्रह, दमः = बाह्य इन्द्रिय निग्रह, सत्यम् = साँचो बोल्नु, अनुग्रहः = अरूको दुःख निवारण गर्ने बानी हुनु, तपः = तपस्या गर्नु, तितिक्षा = सुख दुःख सहनु, अनुभवश्च = व्यावहारिक ज्ञान हुनु ।

श्रीधर :– ये तनुर्मूर्तिर्वेदाख्या येन ब्राह्मणेनेह्लोके धृता यत्र य ब्राह्मणे सत्त्वादयोऽष्टौ गुणाःसन्ति ततः परं किं पश्यामीत्यन्वयः ।

नेपालीमा अर्थ :– जसले यस लोकमा अध्ययनादिकाद्वारा मेरा वेदरूपा अति सुन्दर र पुरातन मूर्तिलाई धारण गरिराखेका छन् । अनि यी ब्राह्मणहरू अत्यन्त पवित्र सत्त्वगुण, शम, दम, सत्य, दया, तप, तितिक्षा र ज्ञानादि आठ गुणहरूले सम्पन्न छन् । यी यस्ता ब्राह्मणहरूभन्दा ठूलो अरू को हुनसक्तछ ? अर्थात् कोही पनि हुनसक्तैन । श्रुति भन्दछ – *'आ ब्रह्मन्ब्राह्मणो ब्रह्मवर्चसी जायतमाराष्ट्रे ।'* *(शुक्लयजुर्वेदः २२।२२)*

२५. *मत्तोऽप्यनन्तापरतः परस्मात्*
*स्वर्गापवर्गाधिपतेर्न किञ्चित् ।*
*येषां किमु स्यादितरेण तेषा–*
*मकिञ्चनानां मयि भक्तिभाजाम् ॥*

ब्रह्मादि भन्दा पनि माथिको छु,
अनन्त हूँ स्वर्ग र मोक्ष दिन्छु ।
तथापि मेरा प्रिय भक्त जो छन्,
मबाट केही पनि चाहँदैनन् ॥

शब्दार्थ :– अनन्तात् = ठूलो शक्ति भएका, परतः = ब्रह्मा भन्दा पनि, परस्मात् = श्रेष्ठ, स्वर्गापवर्गाधिपतेः = भुक्ति र मुक्तिदाता, मत्तः अपि = मैले पनि, अकिञ्चनानाम् = अत्यन्त दुःखी, येषाम् = जसको, न किञ्चित् = केही छैन, तेषाम् =

**तिनीहरू, मयि = ममा, भक्तिभाजाम् = भक्तहरूको, इतरेण = अरूद्वारा, किमु = के कस्तो कुरा, स्यात् = सिद्ध होला ।**

**श्रीधर :– निःस्पृहत्वमाह, मत्तोऽपि येषां न किञ्चित्प्रार्थनीय-मस्ति तेषामितरेण राज्यादिना किमुस्यान्न किमपि ।**

**नेपालीमा अर्थ :– म ब्रह्मादि भन्दा पनि श्रेष्ठ हुँ । म अनन्त हुँ र स्वर्गमोक्ष आदि समेत म दिनसक्तछु । यी सबैथरी सामर्थ्यहरू मसँग भए पनि मेरा अकिञ्चन भक्तहरू यति स्पृहारहित हुन्छन् कि तिनीहरू मसँग कहिल्यै पनि केही इच्छा गर्दैनन् । श्रुतिले भनेको छ –** ***'एतद्ध स्म वै तत्पूर्वे विद्वाँस प्रजां न कामयन्ते किं प्रजया करिष्यामो येषां नोऽयमात्मायं लोक इति ते हस्म पुत्रैषणायाश्च वित्तैषणायाश्च लोकैषणायाश्च व्युत्थाय भिक्षाचर्यञ्चरन्ति ।' (बृ.उ. ४।४।२२)***

२६. ***सर्वाणि मद्धिष्णतया भवद्भि–***
***श्चराणि भूतानि सुता ध्रुवाणि ।***
***सम्भावितव्यानि पदे पदे वो***
***विविक्तदृग्भिस्तदुहार्हणं मे ॥***

हे पुत्र हो ? जे जति भूत आदि,
छन् ती सबैमा छु म नै अनादि ।
सम्झी गरे सन्मनबाट चर्चा,
बन्ने छ सोही सबको समर्चा ॥

शब्दार्थ :– सुताः = हे छोराहरू हो ! वः = तिमीहरू, विविक्तदृग्भिः = ज्ञानी, भवद्भिः = तापाईहरूले, चराणि =

हिँड्ने, ध्रुवाणि = न हिँड्ने, सर्वाणि = सबै, भूतानि = प्राणीहरूलाई, मद्धिष्णतया = म नै भएको ठानेर, पदे पदे = सबै समयमा वा सधैँ, सम्भावितव्यानि = सम्मान गर्नुपर्दछ । तदु = त्यो नै, ह = निश्चय नै, मे = मेरो, अर्हणम् = पूजा हो ।

श्रीधर :– तदेवं ब्राह्मण सम्मानं विधायेदानीं सर्वभूतससम्मानं विधत्ते । सर्वाणीति । हे सुताः सर्वाणि जङ्गमानि स्थावराणि च भूतानि मदधिष्ठानतया वो युष्माभिः सम्माननीयानि । पदे पदे क्षणे क्षणे, विविक्ता पूता मत्सरादिरहिता दृष्टिर्येषान्तैः, तदेव ममार्हणम् ।

नेपालीमा अर्थ :– हे छोराहरू हो ! सम्पूर्ण चराचर भूतहरूलाई तिमीहरू मेरो नै शरीर भन्ने ठानेर शुद्ध बुद्धिद्वारा सेवा गर । यो नै सही पूजा हो । जस्तै – *'यस्तु सर्वाणि भूतान्या-त्मन्येवानुपश्यति । सर्वभूतेषु चात्मानं ततो न विजुगुप्सते ॥'* *(ईशावास्योपनिषद् ६)*

२७. *मनोवचोदृक्करणेहितस्य साक्षात्कृतं मे परिबर्हणं हि ।*
*विना पुमान् येन महाविमोहात् कृतान्तपाशान्न विमोक्तुमीशेत् ॥*

वाणीसँगै दृष्टि र वृत्ति आदि, सुकार्य सम्झे मम पूजनादि ।
छोडेर यी जो प्रतिकूल गर्छ, त्यो कालको नै मुख भित्र पर्छ ॥

शब्दार्थ :– हि = निश्चय पनि, मनोवचोदृक्करणेहितस्य = मन, वचन, दृष्टि तथा चक्षु समेतका इन्द्रियहरूद्वारा हुने चेष्टाहरूको, साक्षात्कृतम् = प्रत्यक्ष फल, मे = मेरो, परिवर्हणम् = अर्चना हो । येन विना = जुन विना, पुमान् =

मान्छे, महाविमोहात् = महामोह्मय, कृतान्तपाशात् = मृत्युका पाशोबाट, विमोक्तुम् = मुक्त गर्न, न ईशेत् = समर्थ हुनसक्तैन ।

श्रीधर :– सर्वकर्मणामीश्वरार्पणं विधत्ते । मनोवचोदृशा–मन्येषाञ्च करणानामीहितस्य व्यापारस्य मे परिबर्हणमाराधनमेव साक्षात्कृतं फलम् । येन परिबर्हणेन विना कालपाशाद्विमोक्तुं न ईशे न समर्थो भवेत् ।

नेपालीमा अर्थ :– मन, वचन, दृष्टिका साथै अरू सबै इन्द्रियहरूको व्यापारको प्रत्यक्ष फल भनेको उपर्युक्त अनुसारको मेरो पूजन नै हो । यसदेखिबाहेक अरू काम गरेर मनुष्यले आफूलाई महामोहमय कालपाशबाट मुक्त गराउन सक्ने छैन । श्रुतिले भनेको । जस्तै – *'ज्ञात्वा देवं सर्वपाशापहानिः क्षीणैः क्लेशैर्जन्ममृत्युप्रहाणिः । तस्याभिध्यानात्तृतीयं देहभेदे विश्वैश्वर्यं केवल आप्तकामः ॥' (श्वेताश्वतरोपनिषद् १।११)*

माथिका २७ श्लोकहरूबाट राजा ऋषभदेवले आफ्ना भरत आदि छोराहरूलाई संन्यासग्रहण गर्नुअघि दिएको अन्तिम उपदेशको प्रसङ्ग समाप्त भयो । ऋषभदेवका उनै जेठा छोरा राजा भरतले राजपाट सबै छोडेर गण्डकीका तटमा अवस्थित पुलहाश्रममा गएर भगवान्को आराधना गरेका थिए । आराधनाका क्रममा राजर्षि भरतले उदित हुँदै गरेका भगवान् श्रीसूर्यको गरेको आराधनायुक्त श्लोक प्रासङ्गिक भएको हुँदा अन्त्यमा यहाँ दिइन्छ । यो श्लोक गायत्री मन्त्रको अनुवादका रूपमा समेत आएकाले यसको अत्यन्त ठूलो महत्त्व भएको हुँदा यहाँ उद्धृत गरिएको छ । जुन यसप्रकार छ –

*परोरजः सवितुर्जातवेदो देवस्य भर्गो अमृतस्येदं जजानः ।*
*सुरेतसादः पुनराविश्य चष्टे हंसं गृध्राणं नृषद्रिङ्गिरामिमः ॥*

– भागवत ५।७।१४

**टाढा छ माया सँग जो अपार, त्यो सूर्यको मण्डल शुद्ध सार ।**
**ऊ भित्र बस्छन् जीवरूप धारी, लिऔँ उनैका पदको छहारी ॥**

**शब्दार्थ :– परोरजः = प्रकृतिदेखि पर, जातवेदः = कर्मको फलदान गर्ने, इदम् = यस सृष्टिलाई, मनसा = इच्छा मात्रले, जजान = उत्पन्न गर्‍यो, अदः = यसैमा, आविश्य = पसेर, गृध्राणम् = कर्मफलमा आसक्त, हंसम् = जीवलाई, पुनः = फेरि, सुरेतसा = चित् शक्तिका रूपमा, चष्टे = हेर्दछ । नृषद्रिङ्गिराम् = प्राणीहरूका बुद्धिवृत्तिलाई प्रेरित गर्ने, देवस्य = झलमलाकार, सवितुः = सूर्यमण्डलाभिमानी परमात्माको भर्गः = पापनाशक ज्योतिर्मय प्रकाश वा कान्तिको, इमः = शरणमा जाऔँ ।**

**श्रीधर :– परोरजः रजसः प्रकृतेः परं शुद्धसत्त्वात्मकं सवितुर्देवस्य सूर्यस्य भर्गः स्वरूपभूत तेजः जातं वेदो धनं कर्मफलं यस्मात्तत्कर्मफलदमित्यर्थः । अत्र हेतुःयन्मनसैवेदं विश्वं जजान ससर्ज । पुनश्च अदः सृष्टं विश्वमन्तर्यामिरूपेण प्रविश्य गृध्राणं काङ्क्षतं हंसं जीवं सुरेतसा चिच्छक्त्या विचष्टे पश्यति, पालयति नृषु सीदत्युपाधितया तिष्ठतीति नृषद्बुद्धिस्तस्यां रिङ्गिं रिङ्गं गतिं राति ददातीति नृषद्रिङ्गिराम् । तद्भर्गः इमः शरणं व्रजामः ।**

नेपालीमा अर्थ :– भगवान् सूर्यको कर्मफलदायक तेज प्रकृतिभन्दा पर छ । उहाँले नै सङ्कल्पद्वारा यस जगत्को उत्पत्ति गर्नुभयो । फेरि उहाँ नै अन्तर्यामीरूपबाट यसमा प्रवेश गरेर आफ्ना चित् शक्तिद्वारा विषयलोलुप जीवलाई रक्षा गर्नुहुन्छ । हामी उनै बुद्धिप्रवर्धक तेजको शरण लिन्छौँ ।
श्रुति :– भूर्भुवः स्वः तत्सवितुर्वरेण्यं भर्गो देवस्य धीमहि । धियो यो नः प्रचोदयात् । (शुक्लयजुर्वेदः ३६।३)

टाढा प्रकृतिभन्दा छ सूर्यको भर्गवैभव ।
यल्ले धीतम नाशेर गर्दिन्छ ज्ञान उद्भव ॥

ॐ ब्रह्मार्पणमस्तु ।



## यस कृतिमा परेका मन्त्रहरू

१३. **तमेव विदित्वाऽति** – श्वे.उ.३।८ (पृ.८५)
१४. **आहारशुद्धौ सत्त्वशुद्धिः** – छा.उ.७।२६।२ (पृ.८६)
१५. **अविद्यायामन्तरे वर्तमानाः** – कठ.उ.१।२।५ (८८)
१६. **गुणान्वयो यः** – श्वे.उ.५।७ (पृ.८९)
१७. **परीक्ष्य लोकान्** – मु.उ.१।२।१२ (पृ.९०)
१८. **न वा अरे पत्युः** बृ.उ.२।४।५ (पृ.९१)
१९. **तं दुदर्शं गूढमनुप्रविष्टम्** – कठ.उ.१।२।१२ (पृ.९३)
२०. **आत्मा वै जायते पुत्र** – (पृ.९३)
२१. **स ईक्षतेमे नु लोकाः** – ऐ.उ.१।१।३ (पृ.९५)
२२. **ब्राह्मणोऽस्यमुखमासीद्** – **शुक्लयजुः** ३१।११ (पृ.९६)
२३. **विप्राशितं देवा अश्नन्ति** – (पृ.९७)
२४. **आ ब्रह्मन्ब्राह्मणो** – **शुक्ल यजुः** – २२।२२ (पृ.९८)
२५. **एतद्ध स्म वै तत्पूर्वे** – बृ.उ.४।४।२२ (पृ.९९)
२६. **यस्तु सर्वाणि भूतानि** – ई.उ.६ (पृ.१००)
२७. **ज्ञात्वा देवं सर्व पाशापहानिः**, श्वे.उ. (पृ.१०१)
२८. **भूर्भुवः स्वः तत्सवितुः** – **शुक्लयजुः** ३६।३ (पृ.१०३)



# सन्दर्भग्रन्थहरू

## अ

| पृ. सं. | | |
|---|---|---|
| ४९ | अनावृत्ति शब्दात् | ब्रह्मसूत्रम्, चौखम्बा विद्याभवन, वाराणसी, सन् १९९६ |
| ७९ | अन्धतमः प्रविशन्ति | ईशावास्योपनिषद्, गीताप्रेस, गोरखपुर, सं. २०६० |
| ८० | असुर्या नाम ते लोकाः | ईशावास्योपनिषद्, गीताप्रेस, गोरखपुर, सं. २०६० |
| ८८ | अविद्यायामन्तर | कठोपनिषद्, गीताप्रेस, गोरखपुर, सं. २०६० |

## आ

| | | |
|---|---|---|
| ४८ | आब्रह्मभुवनाल्लोका | गीता, गीताप्रेस, गोरखपुर सं. |
| ८६ | आहार शुद्धौ सत्त्व शुद्धिः | छान्दोग्योपनिषद्, गीताप्रेस, गोरखपुर सं. २०२३ |
| ९४ | आत्मा वैजायते पुत्रः | |
| ९८ | आब्रह्मन्ब्राह्मणो | शुक्लयजुर्वेद, चौखम्बाविद्याभवन, वाराणसी, सन् २००३ |

## इ

| | | |
|---|---|---|
| ७८ | इमं लोकं हीनतर | मुण्डकोपनिषद्, गीताप्रेस, गोरखपुर, सं. २०६० |
| ८३ | इहैव सर्वे | मुण्डकोपनिषद्, गीताप्रेस, गोरखपुर सं., २०६० |

## ई

| | | |
|---|---|---|
| ८४ | ईशावास्यमिदं सर्वम् | ईशावास्योपनिषद्, गीताप्रेस, गोरखपुर, सं. २०६० |

## ए

| | | |
|---|---|---|
| ६७ | एको देवः सर्वभूतेषु | वेताश्वतरोपनिषद्, गीताप्रेस, गोरखपुर, सं. २०६० |

| | | |
|---|---|---|
| ७६ | एतद्ध स्म वै | बृहदारण्यकोपनिषद्, गीताप्रेस, गोरखपुर सं. २०२५ |
| ४८. | एतेन प्रतिपाद्यमाना | आन्दोग्योपनिषद्, गीताप्रेस, गोरखपुर, सं. २०२१ |

## ग

| | | |
|---|---|---|
| ८९ | गुणान्वयो यः | श्वेताश्वतरोपनिषद्, गीताप्रेस, गोरखपुर, सं. २०५१ |

## त

| | | |
|---|---|---|
| ५ | तमेतमात्मानम् | बृहदारण्यकोपनिषद्, गीताप्रेस, गोरखपुर, सं. २०२५ |
| ७४ | तमेतं वेदानुवचनेन | छान्दोग्योपनिषद्, गीताप्रेस, गोरखपुर, सं. २०२३ |
| ७५ | तद्य इह रमणीय | छान्दोग्योपनिषद्, गीताप्रेस, गोरखपुर, सं. २०२३ |
| ८५ | तमेव विदित्वाऽति | श्वेताश्वतरोपनिषद्, गीताप्रेस, गोरखपुर, सं. २०६० |
| ९३ | तं दुदर्शं गूढमनुप्रविष्टम् | कठोपनिषद्, गीताप्रेस, गोरखपुर, सं. २०६० |
| ५९ | तमेव धीरो | बृहदारण्यकोपनिषद्, गीताप्रेस, गोरखपुर, सं. २०२५ |

## दि

| | | |
|---|---|---|
| ५४ | दिव्यो ह्यमूर्तः पुरुषः | मुण्डकोपनिषद्, गीताप्रेस, गोरखपुर, सं. २०६० |

## न

| | | |
|---|---|---|
| ५७ | न कर्मणा न प्रजया | कैवल्योपनिषद्, उपनिषत्सङ्ग्रहः, मोतीलाल बनारसीदास पब्लिशर्स, दिल्ली, सन् १९९८ |
| ६९ | न तस्य कश्चित् | श्वेताश्वतरोपनिषद्, गीताप्रेस, गोरखपुर सं. २०६० |
| ८१ | न साम्परायः | कठोपनिषद्, गीताप्रेस, गोरखपुर, सं. २०६० |
| ९१ | न वा अरे पत्युः | बृहदारण्यकोपनिषद्, गीताप्रेस, गोरखपुर सं. २०२५ |

## नि

| | | |
|---|---|---|
| ५७, ६५ | निष्कलं निष्क्रियम् | श्वेताश्वतरोपनिषद्, गीताप्रेस, गोरखपुर सं. |

# ने

| | | |
|---|---|---|
| ५ | नेह नानास्ति किञ्चन | बृहदारण्यकोपनिषद्, गीताप्रेस, गोरखपुर सं. २०२५ |

# प

| | | |
|---|---|---|
| ९० | परीक्ष्य लोकान् | मुण्डकोपनिषद्, गीताप्रेस, गोरखपुर सं. २०६० |

# पू

| | | |
|---|---|---|
| ३८ | पूर्वे विद्वांस | बृहदारण्यकोपनिषद्, गीताप्रेस, गोरखपुर सं. २०२५ |

# प्रा

| | | |
|---|---|---|
| ५३ | प्राणस्य प्राणमुत | बृहदारण्यकोपनिषद्, गीताप्रेस, गोरखपुर सं. २०२५ |

# ब्र

| | | |
|---|---|---|
| ४८ | ब्रह्मलोकमभिसम्पद्यते | छान्दोग्योपनिषद्, गीताप्रेस, गोरखपुर सं. २०२३ |

# ब्रा

| | | |
|---|---|---|
| ९६ | ब्राह्मणोऽस्य मुखमासीद् | शुक्लयजुर्वेद, चौखम्बाविद्याभवन, वाराणसी, सन् २००३ |

# भ

| | | |
|---|---|---|
| ८२ | भिद्यते हृदयग्रन्धिः | मुण्डकोपनिषद्, गीताप्रेस, गोरखपुर, सं. २०६० |

# भू

| | | |
|---|---|---|
| ...... | भूर्भुवःस्वः तत्सवितुः | शुक्लयजुर्वेद, चौखम्बाविद्याभवन, वाराणसी, सन् २००३ |

## य

| | | |
|---|---|---|
| ४८ | यं प्राप्य न निवर्तन्ते | गीता, गीताप्रेस, गोरखपुर, सं. २०४७ |
| ५३ | यन्मनसा न मनुते | केनोपनिषद्, गीताप्रेस, गोरखपुर, सं. २०६० |
| ६३ | यतो वा इमानि | तैत्तिरीयोपनिषद्, गीताप्रेस, गोरखपुर, सं. २०६० |
| ७७ | यदिदं किञ्च | कठोपनिषद्, गीताप्रेस, गोरखपुर, सं. २०६० |
| ८५ | यदा सर्वे प्रमुच्यन्ते | कठोपनिषद्, गीताप्रेस, गोरखपुर सं. २०६० |
| १०० | यस्तु सर्वाणि भूतानि | ईशावास्योपनिषद्, गीताप्रेस, गोरखपुर, सं. २०५० |

## रू

| | | |
|---|---|---|
| ...... | रूपं रूपं प्रदिरूपः | बृहदारण्यकोपनिषद्, गीताप्रेस, गोरखपुर सं. २०२५ |

## वा

| | | |
|---|---|---|
| २५ | वाचारम्मणं विकारो | छान्दोग्योपनिषद्, गीताप्रेस, गोरखपुर सं. २०२३ |

## वि

| | | |
|---|---|---|
| ९७ | विप्राशितं देवा अश्नन्ति | |

## स

| | | |
|---|---|---|
| ९५ | स ईक्षतेमे नु लोकाः | ऐतरेयोपनिषद्, गीताप्रेस, सं. २०६० |

## श्रे

| | | |
|---|---|---|
| ६३ | श्रेयश्च प्रेयश्च | कठोपनिषद्, गीताप्रेस, गोरखपुर, सं. २०६० |

## ज्ञ

| | | |
|---|---|---|
| १०१ | ज्ञात्वा देवं सर्वपाशापहानि | श्वेताश्वतरोपनिषद्, गीताप्रेस, गोरखपुर, २०६० |

# लेखकका
# भक्ति र ज्ञान सम्बन्धी
# प्रकाशित ग्रन्थहरू

१. ज्ञान र भक्ति – २०६३
२. रासपञ्चाध्यायी – २०६४
३. तीर्थहरूको यात्रावृत्तान्त – २०६४
४. ब्रह्मसाक्षात्कार – २०६५
५. उपनिषत्सार – २०६७
६. ब्रह्मसूत्रसार – २०६७
७. मणिरत्नमालाप्रश्नोत्तरीको अनुवाद – २०६७
८. ब्रह्मसूत्रको अध्यास र चतुःसूत्री – २०६८
९. वेदान्तपरिभाषासार – २०६८
१०. श्रीकृष्णाय वयन्नुमः – २०६९
११. परमसत्य – २०६९
१२. अध्यास – २०६९
१३. अद्वैतसिद्धिः नेपाली अनुवादसहित, प्रथमखण्ड – २०६९
१४. ब्रह्मविद्या – २०७०
१५. अद्वैतसिद्धिः नेपाली अनुवादसहित, द्वितीयखण्ड – २०७०
१६. अन्तिम उपदेश – २०७०